● वर्ष ९ ● अङ्क ११ ●आषाढ २०६५ ● पूर्णाङ्क १०७

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–४,
  फोन: ०६४-४२९३१८
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर-९, शेराबजार
- **भक्तपुर**, सूर्यविनायक,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-५६०१६९
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## ब्रह्माण्डीय विद्या विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-


ब्रह्माण्डीय विद्या ४
ब्रह्माण्डका राम्रा-नराम्रा विषयवस्तु ६
ब्रह्मज्ञानबाट मोक्ष ९
ज्योतिष र मानव जीवन १०
ब्रह्माण्डीय शाश्वत सत्य १२
तन्त्रः ब्रह्माण्डीय विद्या १५
महाप्रयाण १८
गुरु पूर्णिमा २१
दश महाविद्या २४
सवालाख रोट महोत्सव-२०६५ २६
श्री गोरख महापुराण २८
गुरु र शिष्य ३०
हस्तरेखा ३४
त्रिशुल जात्रा ३६
ब्रह्मचर्य ३८
अनुभव अनुभूति ४०
सूक्ष्म शरीरको यात्रा ४१
आश्रम गतिविधि ४४
योग ४६
अवतरण यात्रा ४७
गुरु गीता ४८
श्री निखिलेश्वर शतकम् ४९
दिव्य साधनात्मक सूत्रहरू ५०
जाँदा जाँदै ५२

## जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौंमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

### परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र सोमबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**
**फोन नं: २०७१२००, २१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), Email: gonisa@ntc.net.np

# आफ्नै कुरा

सिद्धाश्रम शक्ति केन्द्रले हालसालै पाचौँ रोट महोत्सव दिव्य एवं भव्यरुपमा सम्पन्न गऱ्यो । रोट महोत्सवको ऐतिहासिक थालनी गरी पाचौँ रोट महोत्सवलाई पनि भव्यरुपमा सन्पन्न गर्न सकेकोमा यस संस्था गौरवान्वित भएको छ । आफ्ना परम आराध्य गुरु श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पण भव्य रोट महोत्सवबीच सुसम्पन्न भयो । देशका विभिन्न भागबाट आउनु भएका हजारौँ व्यक्तिहरुको सहभागितामा यस महोत्सव गुरु गोरखको प्रथम प्रकट स्थल गोरखास्थित गोरख गुफामा सम्पन्न भयो ।

एघारौँ दिनसम्म लगातार चल्ने रोट महोत्सवको गौरवमय थालनीसँगै सिद्धाश्रम शक्ति केन्द्रले धेरै उपलब्धिहरु हासिल गरेको अनुभव गरिएको छ । चौथो रोट महोत्सवसम्म आइपुग्दा देश, काल, परिस्थिति तुलनात्मकरुपमा हत्या, हिंसा, युद्धबाट शान्ति र परिवर्तनको दिशामा उन्मुख भएको छ । देशले आमूल परिवर्तनको संकेत प्राप्त गरेको छ । नयाँ शैली, नयाँ रुपबाट देश चल्ने तयारी भइरहेको छ । हिजो युद्ध, हिंसालाई अंगाल्नेहरु शान्तिको नारा दिंदै शासन सत्ता चलाउन लागेका छन् । देश अब कसरी अगाडि बढ्छ ? के साँच्चि नै आम मानिसहरुले सोचे जस्तै परिवर्तन हुन्छ ? यी सबैका लागि कौतुहलको प्रश्न बनेका छन् । जबसम्म व्यक्तिका लक्ष्य परिवर्तन हुँदैन, जबसम्म व्यक्ति मानवको नाताले सामाजिक दायित्वको, कर्तव्यको, आम व्यक्तिको कल्याणको लागि सोच्दैन तबसम्म देशमा परिवर्तन सम्भव छैन । व्यक्ति जब आफूभन्दा, परिवारभन्दा, समाजभन्दा माथि उठ्छ तब मात्र उसले देशको लागि केही गर्न सक्दछ । अन्यथा सङ्कीर्ण मानसिकता बोकेका व्यक्तिहरु ठूला-ठूला नेता भए पनि, मन्त्री, प्रधानमन्त्री भए पनि उनीहरुबाट देशको लागि केही हुँदैन, हुन्छ भनेर सोच्नु पनि मूर्खता हुनेछ । त्यसैले आम नागरिकहरुको उच्च आकांक्षालाई नेताहरुले कदर गर्न जान्नु पर्दछ । जब व्यक्ति घर, परिवार, समाजभन्दा माथि उठ्छ अनि ऊ आध्यात्मिक हुन थाल्दछ । आध्यात्मिक व्यक्तिले नै देशलाई सही दिशा दिन सक्दछ, समाजलाई स्पष्ट नेतृत्व दिन सक्दछ । मानव कल्याणको लागि मार्ग देखाउन सक्दछ । साथसाथै देशलाई उन्नत, समृद्धशाली र विकसित बनाउन सक्दछ ।

यसपालि हामीले 'ब्रह्माण्डीय विद्या' विशेषको रुपमा यस अंकलाई यहाँहरुको हातमा ल्याउन सफल भएका छौँ । ब्रह्माण्डीय विद्यासम्बन्धी हामीले धेरै शोध-खोज गरी यहाँहरुलाई जानकारी दिने कोशिस गरेका छौँ । तर पनि समाजमा यस विद्यासम्बन्धी जानकार व्यक्तिहरुको कमी भएको पायौँ । हाम्रै खोजको कमी हो वा समाजमा नै यस्ता व्यक्तिहरु दुर्लभ भएको हो । चाहे जे होस्, ब्रह्माण्डभित्र अवस्थित विद्याहरु अनन्त छन्, कति जल विद्या होलान्, कति थल विद्याहरु होलान्, स्थूल, सूक्ष्म आदि विद्याहरुले सजिएको ब्रह्माण्डीय विद्या सामान्य व्यक्तिको पहुँचभन्दा धेरै पर रहेको छ । तैपनि यस्ता विषयवस्तुलाई कोट्याएर जे जति सामग्रीहरु दिन सकियो त्यो पनि हाम्रो सफलता नै ठानेका छौँ । यस्तो गुढ र रहस्यमय ब्रह्माण्डीय विद्यालाई यहाँहरुले पनि आ-आफ्नै तर्फबाट शोध-खोज गर्नु हुनेछ भन्ने आशा लिएका छौँ ।

अन्तमा, यस अङ्कमा भए गरेका गल्ती, कमी-कमजोरीका लागि परमपूज्य सद्गुरुदेव र यहाँहरुसँग क्षमायाचना गर्दै आवश्यक सल्लाह, सुझाव र प्रतिक्रियाको आशा गर्दछौं ।

अस्तु ।

# ब्रह्माण्डीय विद्या

ब्रह्माण्डीय विद्या भनेको के हो ? यस विषयले पक्कै पनि सबैलाई खुल्दुली मच्चाएको हुन सक्छ। अहिलेसम्म जति पनि विद्याहरू हामीले ग्रहण गर्‍यौं र पछि पनि ग्रहण गर्नेछौं, ती सबै ब्रह्माण्डीय विद्याभित्र पर्दछन् भन्दा कमैलाई मात्र विश्वास होला । रहस्यै रहस्यले भरिएको ब्रह्माण्डीय विद्याको विषयमा जान्न पाउनु पनि अहोभाग्य हो । सारा जीव जीवात्मा, चराचर जगत्, समस्त ग्रह, नक्षत्र, तारागण आदि समेटिएर बनेको जुन असीमित स्वरूप छ, त्यसलाई ब्रह्माण्ड भनिएको छ । असीमित स्वरूपलाई ब्रह्माण्ड भनिसकेपछि यी सारा ब्रह्माण्डभरिका जे जति विषयवस्तुहरू छन्, ज्ञात-अज्ञात विषयवस्तुहरू छन्, सूक्ष्म-स्थूल विषयवस्तुहरू छन्, यी सबैको बारेमा एक-एक गरेर वृत्तान्त दिने, त्यसको बारेमा ज्ञान दिलाउने, त्यसको बारेमा जे-जति विषयवस्तुहरू छन्, तिनीहरूलाई प्रकाश पार्ने, व्याख्या गर्ने, ती सबैलाई

समेटिएको विद्या नै ब्रह्माण्डीय विद्या हो । यसरी यो ब्रह्माण्डभरिका सबै प्रकारका विद्याहरू एउटैमा समावेश भएको विद्या नै ब्रह्माण्डीय विद्या हो र यो ब्रह्माण्डीय विद्याको माध्यमबाट नै यस ब्रह्माण्डभरि जुनसुकै कुना-काप्चाबाट ऋषिमुनिहरू जन्मिऊन्, ऋषिमुनिहरू विकसित रूपबाट अगाडि आऊन् अथवा देवीदेवताहरू विकसित रूपबाट अगाडि आए पनि उहाँहरूले प्राप्त गर्ने भनेको यही ब्रह्माण्डीय विद्याको आधारमा हो । यही ब्रह्माण्डीय विद्याको आधारमा उहाँहरू कुन सेक्टरका हुनुहुन्छ अर्थात् उहाँहरू कुन च्यानलका हुनुहुन्छ, त्यही च्यानलअनुसार उहाँहरूले आफूले लिएर अरुलाई दिने मात्रै हो । जसले जहाँबाट लिनुभए पनि यही ब्रह्माण्डभित्रकै कुराहरू लिएर दिने मात्र हुन् । त्यसैले हिन्दुहरूले प्राप्त गर्ने कुरा कहाँबाट आउँछन् ? बौद्धहरूले प्राप्त गर्ने कुरा कहाँबाट आउँछन् ? इसाईहरूले प्राप्त गर्ने कुरा कहाँबाट आउँछन् ? मुस्लिमहरूले प्राप्त गर्ने कुरा कहाँबाट आउँछन् ? यी सबै विषयवस्तुहरू ब्रह्माण्डबाटै आउने हुन् र ब्रह्माण्डबाट आउँदा यो धर्म, त्यो धर्म भन्ने नै हुँदैन । ब्रह्माण्डभित्रका सबै त्यही भित्रका मानिन्छन् । जसरी एउटा परिवारमा बाबुआमा हुन्छन्, उनीहरूका छोराछोरीहरू हुन्छन् । छोराछोरीका बानी-व्यवहार पनि अलग-अलग हुन्छन् । अलग-अलग रूपबाट उनीहरू चिनारी दिनका लागि पनि कसैले केही विषयमा पारंगतता हासिल गर्छन्, कसैले केही विषयमा पारंगतता हासिल गर्छन् । तर त्यसको पूर्ण लगानी तिनै बाबुआमाले नै गरिरहेका हुन्छन् । त्यस्तै, यस ब्रह्माण्डबाट ऋषिमुनिहरूलाई अथवा कुनै धर्मविशेषलाई जे-जति विद्याहरू प्राप्त हुन्छन्, ती सबै ब्रह्माण्डभित्रकै कुरा हुन् र त्यो ब्रह्माण्डको एउटै धर्म हुने भयो । ब्रह्माण्डमा सृष्टि भएका सम्पूर्ण चराचर जीव जगत्को कल्याण गर्ने, समस्त ब्रह्माण्डभित्रकै कल्याणको लागि यो ब्रह्माण्डीय विद्या स्थापना भएको हुन्छ । यसमा यो धर्म, त्यो धर्म भन्ने नै हुँदैन जसरी एउटै परिवारमा बाबुआमा एउटै भए पनि उनीहरूबाट जन्मिएका छोराहरू जेठो, माइलो, साहिँलो, काइँलो, कान्छो हुँदै जान्छन् । यिनीहरूका बानी-व्यवहार पनि अलग-अलग हुन्छन् । जेठाले भनेको माइलाले नमान्न सक्छ । माइलाले भनेको साहिँलाले नमान्न सक्छ । त्यस्तै गरेर यो ब्रह्माण्डमा स्थापित भएका व्यक्तित्वहरू, स्थापित भएका धर्मविशेष पनि अलग-अलग भएको देखिएता पनि अलग-अलग होइनन् । उनीहरू ब्रह्माण्डबाट नै सम्प्रेषित हुन्छन्, उनीहरू चरम सीमामा पुगेर फेरि ब्रह्माण्डमै गएर विसर्जित हुन्छन् । त्यसैले, सबै प्रकारका धर्म, सबै प्रकारका जात-जाति, सबै प्रकारका व्यक्तित्वहरूले प्राप्त गर्ने कुरा यस

ब्रह्माण्डभित्रकै हुन् ।

ऋषिमुनि वा पहिले-पहिलेका विद्वान्हरूले जे-जे कुरा लेखिदिएका छन्, लिपिबद्ध गरिदिएका छन्, शास्त्रस्वरूप बनाइदिएका छन्, तिनीहरूलाई मात्रै अहिले पृथ्वीमा हामीले पढ्न पाइरहेका छौँ । जानकारहरूले त्यही बारेमा व्याख्या गरे, त्यही व्याख्या भएका कुराहरू हामीले जान्ने-बुझ्ने मौका पायौँ । यस ब्रह्माण्डमा जे जति बाहिर लेखिएर आए, तीमध्ये पनि कति सुरक्षित रहन सके, तिनीहरूका कुराहरू मात्र हामीले थाहा पाउन सक्यौँ । तर नलेखिएका विद्याहरू पनि छन् जसको बारेमा समाज अहिलेसम्म पनि अनभिज्ञ छ, त्यसको बारेमा जानकारी नै छैन । त्यस बारेमा कसरी जानकारी प्राप्त गर्ने भन्ने सम्बन्धमा पनि केही बुझ्नु आवश्यक छ ।

समाजमै रहेका व्यक्तिहरूमध्येबाट कोही तपस्वी हुँदै जान्छन् । उहाँहरू ध्यानमग्न हुँदै जाने क्रममा ब्रह्माण्डको परासत्ताको माध्यमबाट उहाँहरूलाई भावनाद्वारा, सपनाको माध्यमबाट, ध्यानको गहिराइमा गएर ज्ञानको माध्यमबाट यस्ता प्रकारका विद्याहरू प्रस्फुटित हुन्छन् । प्रस्फुटित भएका विद्याहरूलाई कसै-कसैले ध्यानमा आएको भन्नुहुन्छ, कसै-कसैले सपनामा आएको भन्नुहुन्छ, कसै-कसैले भावनामा आएको भन्नुहुन्छ । ती आएका कुराहरूमा पनि कसैले कलम चलाउनुहुन्छ भने कसैले चलाउनुहुन्न । उहाँहरूले कति लेख्नुभयो त्यति नै समाजमा आउने भयो । कलम नचलाउनेहरूका ती विद्याहरू आफूमै सीमित रहने भयो, बाहिर आउने भएन । यसरी धेरै विद्याहरूमा कलम चलाइँदैन, थोरैमा मात्र कलम चलाइन्छ । कलम चलाइएको विषय मात्रै हामीले थाहा पाउने हो । योगी, तपस्वी, ध्यानीहरूले ब्रह्माण्डका सबै विद्याहरूलाई एक-एक गरेर हासिल गर्न सक्नुहुन्छ, त्यस बारेमा जानकारी प्राप्त गर्न सक्नुहुन्छ र समाजलाई दिन सक्नुहुन्छ । अहिलेसम्म जे-जे कुरा लेखिएका छन्, ती कुराको आधारमा मात्र समाजले विश्लेषण गर्ने भयो । यसरी तुलना गर्दा भिन्न-भिन्न किसिमका विषयवस्तुहरू आए भने ती विषयवस्तुहरू समाजले ग्रहण नगर्न सक्छ । ग्रहण नगरेपछि अगाडि बढ्ने भन्ने त कुरै भएन । यस ब्रह्माण्डमा जे-जति विद्याहरू बाहिर आएका छन्, ज्ञानगुनका कुराहरू छन्, तिनीहरू शास्त्रहरूको माध्यमबाट, कुनै विद्वान्ले लेखिदिएका पुस्तकहरूको माध्यमबाट हासिल गर्नुपर्छ र बाँकी विषयवस्तुलाई योगी, तपस्वी, ऋषिमुनिहरूको ज्ञानको आधारमा पनि हामीले हासिल गर्नुपर्दछ । यसका साथसाथै ती ऋषिमुनि, योगी तपस्वीहरूले प्राप्त गर्नुभएका विषयवस्तु त क्षमताको आधारमा उहाँहरूले प्राप्त गर्ने हो । उहाँहरूले प्राप्त गर्न बाँकी विषय त फेरि बाँकी नै रहने भयो । यदि ध्यानमा लाग्यौँ, योगमा लाग्यौँ, तपस्याको लाइनमा लाग्यौँ भने हामी पनि ती बाँकी विषयवस्तुहरूलाई प्राप्त गर्न सक्ने हुन्छौँ । त्यसरी प्राप्त भएका कुराहरूलाई समाजसमक्ष हामीले पनि राख्दै जानुपर्दछ, यो समयको माग हो ।

# ब्रह्माण्डका राम्रा-नराम्रा विषयवस्तु

ब्रह्माण्डबाट प्राप्त विषयवस्तुहरू ठीक हुन् कि बेठीक हुन् भनेर छुट्ट्याउन हामीलाई समस्या पर्न सक्छ । त्यसलाई पहिचान गरेर यो ठीक हो, यसलाई लागू गर्नुपर्दछ भनेर लागू गर्नका लागि एउटा न एउटा कसीको आवश्यकता हुन्छ । यहाँ एउटा कुरा के प्रष्ट हुन आवश्यक छ भने ब्रह्माण्डमा त सबै कुराहरू छन्– राम्रा, नराम्रा, ठीक-बेठीक सबै कुराहरू छन् । योगी, ऋषिमुनिहरूले डुब्दै जाने क्रममा राम्रा, नराम्रा सबै प्राप्त गर्न थाल्नुहुन्छ । कुन ठीक हो, कुन बेठीक हो, कुन राम्रो हो, कुन नराम्रो हो, उहाँहरूको बुद्धिले ठम्याउन सक्दैन । उहाँहरूले त आएका कुराहरूलाई लेखिदिँदै जानुहुन्छ र समाजसमक्ष राखिदिँदै जानुहुन्छ । केलाउने क्रममा, त्यसलाई छानविन गर्ने क्रममा समयको रफ्तारसँगसँगै प्रकृतिले नै त्यसलाई छानविन गरेर यो ठीक, यो बेठीक भनेर छुट्ट्याइदिने काम गर्छ । साधक-साधिकाहरू, ध्यानीहरूमा विभिन्न किसिमका क्षमताहरू हुन्छन् । कसैले नराम्रै नराम्रा मात्र तान्न सक्नुहुन्छ, कसैले राम्रै राम्रा मात्र तान्न सक्नुहुन्छ । कसैले राम्रो-नराम्रो सबै तान्न सक्नुहुन्छ । त्यही भएर समाजमा यी सबै इलेक्ट्रोन, प्रोटोन र न्यूट्रोनको नियम भनेजस्तै जसले राम्रै-राम्रो मात्र तान्न सक्छ, उसले राम्रै-राम्रो लेखिदिने भयो । नराम्रै-नराम्रो मात्र तान्न सक्नेले नराम्रै-नराम्रो लेखिदिने भयो । दुवै किसिमको विद्या तान्नेले राम्रा-नराम्रा दुवै लेखिदिने भयो । यो समाजले केलाउने विषय हो । यसलाई विश्लेषण गर्ने, राम्रो-राम्रो लिने, नराम्रो नलिने त्यो त व्यक्तिपिच्छेका नै फरक-फरक कुराहरू हुन् । तर पनि हामीले कुन राम्रो, कुन नराम्रो ठम्याउने कुरा त समयअनुसार हुने भयो । आज नराम्रो भनिएको विषयवस्तु पचास वर्षपछि राम्रो हुन सक्छ । आज राम्रो भनिएको विषयवस्तु फेरि पचास-सय वर्षपछि नराम्रो हुन सक्छ । समयको रफ्तारसँगसँगै

एउटै कुरा एक समयमा राम्रो हुन्छ अर्को समयमा नराम्रो हुन्छ । उदाहरणको लागि अंग्रेजी भाषा बोलिने मुलुकमा अंग्रेजी भाषा नजान्ने मान्छे पुग्यो भने उसले अंग्रेजी भाषालाई नराम्रो भन्न सक्छ किनभने बुझ्दै नबुझिने भाषा उसको लागि नराम्रो हुने भयो । अर्को ठाउँमा फेरि त्यही भाषा राम्रो हुने भयो । ब्रह्माण्डबाट आएका कतिपय ज्ञानगुनका कुराले आत्मालाई तृप्त गर्ने हो, आत्मालाई सन्तुष्टि दिने हो, आत्मालाई ज्ञानले भरिदिने काम गर्ने हो । तर भौतिक दुनियाँमा हुर्केकाहरू, भौतिकतामा रुमल्लिएकाहरू, मोजमस्तीमा हराएकाहरूलाई ज्ञानगुनका कुराहरूको त मतलब नै हुँदैन । उनीहरूले त त्यतिबेला मोजमस्तीमा हराउनुलाई मात्र ठूलो कुरा ठान्छन् । उनीहरूले त्यस्ता ज्ञानगुनका कुराहरू बुझ्न सक्दैनन् । त्यसबेलामा ज्ञानगुनका कुराहरू त उनीहरूका लागि मिथ्या हुन सक्छन् । यो हुँदै होइन भनेर उनीहरूले भन्न सक्छन् । ज्ञानीहरूको समाजमा जाँदा यो मोजमस्ती भनेको क्षणिक हो, मोजमस्तीमा हराउनु हुन्न, शरीरलाई जीवित राख्नका लागि मात्र खानेकुरा खाने हो, खानेकुराले शरीरलाई खान हुँदैन भन्ने मान्यता पाइन्छ । यसरी एउटै मान्यता पनि जमातअनुसार अलग-अलग प्रकृतिको मानिन्छ । एक ठाउँमा राम्रो हुने भयो, अर्को ठाउँमा नराम्रो हुने भयो । ब्रह्माण्डबाट आएका जे जति विषयवस्तु छन्, ती विषयवस्तुहरू पनि कुनै राम्रो लाग्न सक्छ, कुनै नराम्रो लाग्न सक्छ । प्रकृतिद्वारा नै कोही राम्रो मान्छे, कोही नराम्रो मान्छे, कोही राम्रो-नराम्रोको मिश्रण भएको हुनाले ब्रह्माण्डबाट आउने कुराहरू पनि राम्रा-नराम्रा, राम्रा-राम्रा, अनि नराम्रा-नराम्रा यी सबै मिश्रित भएर आउँछन् । त्यसलाई छानविन गर्ने जिम्मेवारी पनि समाजको नै हुन्छ । र, एउटाले मिश्रित ल्याइदिन्छ भने अर्कोले यो-यो कुरा राम्रो हुन सक्छ भनेर विश्लेषण गरेर उसले नै छुट्याइदिने काम गर्छ । प्रकृतिमा इलेक्ट्रोन, प्रोटोन र न्यूट्रोनको

तराजु विद्यमान छ । ब्रह्मा, विष्णु र महेश्वर स्वयंमा इलेक्ट्रोन, प्रोटोन र न्यूट्रोनको प्रतिविम्ब हुनुहुन्छ । मनुष्यमा पनि सत्व, रज र तम गरी तीन गुणको मिश्रण भएको छ । यसरी गुणहरू पनि मिश्रित भएर यी तीन गुणहरूबाट नै विभूषित भइरहेको हुनाले आएका कुराहरूलाई लिनुपर्दछ, समयअनुसार राम्रो ठहर भएकाहरूलाई 'यो राम्रो छ' भनेर लेखिदिनुपर्‍यो, नराम्रो ठहर भएकाहरूलाई 'यसबेला यो नराम्रो सावित हुन आयो' भनेर लेखिदिनुपर्‍यो । लेखिदिएका कुराहरूलाई नै समाजले एउटा आधारविन्दु बनाउँदछ ।

ब्रह्माण्डमा भएका विषयवस्तुहरू विभिन्न समयमा विभिन्न योगी, तपस्वी, ध्यानी, विद्वान्हरूले एउटा-एउटा रूपबाट ग्रहण गरेर लेखिदिए र समयको रफ्तारसँगसँगै कुनै हराए, कुनै नष्ट भए भने कुनै समाजमा सुरक्षित रहे । सुरक्षित हुन नपाएका विद्याहरू जो हराए, नष्ट भएर गए, ती ब्रह्माण्डमा त सुरक्षित अवस्थामा नै छन्, मात्र भौतिक दुनियाँमा लेखिएका ग्रन्थहरू हराएका हुन् । त्यो विद्यालाई जसले ताने, ती ऋषिमुनि, ध्यानी, योगी, तपस्वीहरूको पहिले भौतिक देह थियो भने अब त भौतिक देह छैन । तर उहाँहरूको सूक्ष्म देह छ, सूक्ष्म देहलाई त ती सबै कुराहरू ज्ञात भइरहेको हुन्छ । योग, ध्यान, तपस्याको माध्यमबाट त्यो गहिराइमा पुगेर त्यस सूक्ष्म देहसँग सम्पर्क गर्न सक्ने भयौँ, अनि त्यस सूक्ष्म देहलाई खुशी पार्न सक्ने भयौँ भने त्यो सूक्ष्म देह फेरि हाम्रो देहमा प्रवेश गरेर त्यही विद्यामा पनि कलम चलाइदिन सक्नुहुन्छ । पहिले लेखिएको ग्रन्थ त अहिले छैन । यसो भएपछि अब त्यस कुरालाई तुलना गर्न पाइएन । यसरी तुलना गर्न नपाएपछि हामीहरूमा अलिकति द्विविधात्मक स्थिति त आउँछ । तर ती कुराहरू लेख्दै गएपछि सत्य सावित हुँदै जान्छन् । स्वतः नै ती विद्याहरू पुनः पत्ता लगाइयो भनेर समाजमा फेरि पृष्ठपोषण हुन्छ । यसरी ब्रह्माण्डमा सुरक्षित, असुरक्षित भन्ने हुँदैन, ब्रह्माण्डमा भएका सबै प्रकारका विद्याहरू सुरक्षित छन्, जे-जति पृथ्वीतटमा आए, यिनीहरू ब्रह्माण्डकै थिए । अनि हराए, नष्ट भए भनिए पनि ती ब्रह्माण्डमा नै फर्केर गए । जो क्षमतावान् व्यक्तित्व हुनुहुन्छ उहाँले आफ्नो योगशक्तिको माध्यमबाट आफ्नो देहमा तानेर फेरि लेख्न सक्नुहुन्छ ।

# विद्या हस्तान्तरणमा स्थूल र सूक्ष्मको भूमिका

कुनै पनि विद्याको हकदार पहिले जसले प्राप्त गऱ्यो त्यो व्यक्ति नै हुन्छ । विद्यालाई प्राप्त गरेर व्यक्तिले देह त्यागेर गएपछि त्यस विद्यालाई पुनः प्राप्त गरेर पृथ्वीतटमा स्थापित गर्न परेको खण्डमा त्यही सूक्ष्म देहले स्थूल देह धारण गरी मनुष्य जीवन लिएर आएर फेरि ती सिद्धि-शक्तिको हकदार भएर त्यो सिद्धि, शक्ति समाजसमक्ष पनि देखाउन सक्दछ । मनुष्य देहमा आउँदा विभिन्न किसिमका कमी-कमजोरीहरू थपिँदै गएर आफ्नो पहिलेको शुद्ध पवित्र शरीरभन्दा गएगुज्रेको हुन जाला भन्ने डरले कसै-कसैले आफ्नो बानी व्यहोरा सुहाउँदो, आफूसँग मिल्दोजुल्दो कुनै स्थूल शरीरवाला फेला परेमा त्यो सूक्ष्म देह त्यस स्थूल शरीरमा प्रवेश गरेर सिद्धि-शक्ति देखाउन सक्दछ । यस क्रममा नाम त अर्कैको हुने भयो, तर काम चाहिँ उनीहरूले आफ्नै गर्ने भए, त्यस्तो अवस्थामा पनि आफूमा भएका सम्पूर्ण प्रकारका सिद्धि-शक्तिहरू त्यस देहलाई प्रदान गरेर त्यस देहको माध्यमबाट आफूले आफ्नो जुन सिद्धि रूप हो त्यस सिद्धि रूपलाई पनि प्रकट गर्न सक्दछन् । यस रूपबाट भन्नुपर्दा जो क्षमतावान् सूक्ष्म देहधारी हुनुहुन्छ, उहाँहरूले जन्मेर आएर सिद्धिको भोग पनि गर्न सक्नुहुन्छ, उहाँहरू नजन्मीकन कसैको देहभित्र पसेर सिद्धिको भोग पनि गर्न सक्नुहुन्छ ।

कसैको देहभित्र पसेर क्षमतावान् सूक्ष्म देहले सिद्धि-शक्ति भोग गर्दछ भने स्थूल शरीरलाई फाइदा पनि हुन सक्छ, व्यावहारिक ज्ञानको अभावमा कहिलेकाहीँ बेफाइदा पनि हुन सक्छ । त्यस्तो अवस्थामा बेफाइदाको जिम्मेवारी पनि त्यही स्थूल देहले लिने भयो, फाइदै-फाइदा भयो भने पनि त्यस स्थूल शरीर उसको भएको हुनाले र स्थूल शरीरभित्र फलानो सूक्ष्म देह पसेको छ भन्ने समाजले थाहा नपाउने हुनाले स्थूल शरीरले मान-सम्मान, सिद्धिको भोगका फाइदाहरू पाउँछ । यसरी फाइदा, बेफाइदा दुवै रूपले स्थूल शरीरले पनि पाउने भयो, अनि स्थूल शरीरलाई प्राप्त भएको मान-सम्मान, भोग त्यस स्थूल शरीरभित्रको सूक्ष्म देहलाई केही अंश प्राप्त हुने हुन्छ, उहाँलाई पनि सन्तुष्टि मिल्दछ । अनि हानी-नोक्सानी, यताउता भयो भने, त्यसको सदुपयोग हुन सकेन भने लाञ्छना, आरोप-प्रत्यारोप स्थूल शरीरलाई पनि हुने भयो, अनि स्थूल शरीरभित्र निवास गर्ने सूक्ष्म देह पनि त्यस असफलताको भागीदार बन्नुपर्ने हुन्छ । यस रूपबाट हेर्दा बढीमा पचास-पचास प्रतिशत, घटीमा बीस र असी प्रतिशत अथवा फेरि असी र बीस प्रतिशत यसरी प्रतिशतको फाइदा वा बेफाइदाको हिसाब हुन सक्छ ।

जय गुरुदेव !

जीवात्मा र परमात्माको दृढ अपरोक्ष साक्षात्कारलाई ब्रह्मात्मैक्यबोध अथवा ब्रह्मज्ञान भनिन्छ । ब्रह्मज्ञानबिना परमपद प्राप्ति किंवा मोक्षलाभ सम्भव नै छैन भनी हाम्रा वेद, उपनिषद्, गीता, योगवासिष्ठ, अध्यात्मरामायण, ब्रह्मसूत्र आदि मोक्षपरक शास्त्रहरू एकमतले उद्घोषणा गर्दछन् ।

**ब्रह्मसत्यं जगत्मिथ्या ।**
**जीवोब्रह्मैव नापर ।**

ब्रह्म सत्य हो । जगत् मिथ्या हो । जीव नै ब्रह्म हो । अर्को होइन । यसभन्दा पर जान्नुपर्ने र हुनुपर्ने कुरो बाँकी पनि छैन । यसरी हाम्रा उपनिषद्जस्ता महान् प्रामाणिक शास्त्र र तिनका अनुयायी आचार्यहरूले आफ्ना ग्रन्थहरूमा स्पष्टरूपमा प्रतिपादन गरेका छन् ।

जीवनको, जगत्को, तन्त्रको,

# ब्रह्मज्ञानबाट मात्र मोक्ष

-प्रा. शिवगोपाल रिसाल

मन्त्रको, भूगोलको, खगोलको, अन्तरिक्षको, स्थूलको, सूक्ष्मको, कारणको, यस लोकको, परलोकको, अनन्त ब्रह्माण्डकै ज्ञान भएता पनि यदि ब्रह्मज्ञान भएको छैन भने त्यो भ्रमज्ञान नै हो, केही काम छैन; त्यसकारण आत्यन्तिक कल्याण हुँदैन । ब्रह्मज्ञान मात्र लिनका लागि अनि ब्रह्म नै हुनका लागि हो भने त्यसदेखि भिन्न सारा ज्ञान छोड्नका लागि हो ।

अन्य ज्ञानले न त तीनै प्रकारको तापबाट शान्ति मिल्छ, न त निरतिशय अखण्ड, परिपूर्ण आनन्दको अनुभूति नै हुन्छ । यसर्थ, मानवजीवनको एक मात्र परमपुरुषार्थ भनेको मोक्षप्राप्ति हो । मोक्षका लागि ब्रह्मज्ञान मात्र समर्थ छ, अर्को बाटो नै छैन । सामान्यतया चित्तशुद्धिका लागि वेदमा बताइएका कर्मकाण्डको सम्पादन गर्नुपर्छ । त्यो पनि निष्काम भावनाले । कामनापूर्वक गरिएको छ भने वैदिक कर्मले पनि चित्तशुद्ध गर्न सक्दैन । त्यसैगरी भगवान्को भक्ति पनि नितान्त आवश्यक छ चित्त विशुद्धिको लागि, विशेष प्रकारको शुद्धिका लागि । वैदिक कर्म सम्पादनबाट बाहिरतिर, विषयतिर, भोगवासनातिर हुरुक्क मरिमेटेर लागेको चित्तको वृत्ति अन्तर्मुख हुन्छ, विषयादिबाट विराग हुन्छ र परमात्मा परब्रह्मतिर अत्यन्त अनुराग हुन थाल्छ । त्यसपछि भगवान्, परमात्मामा अनन्य भक्ति भएपछि चित्त राम्रैसँग अन्तर्मुख हुने मात्र होइन, आफूमा, आत्मामा, परमात्मामा रमाउन थाल्छ, बाहिरी प्रलोभनले, आकर्षणले खिच्न, तान्न, लोभ्याउन सक्दैन । अब त्यस भक्तको, साधकको विक्षेपदोषको निवारण हुन्छ । अगाडि कर्मद्वारा मलदोष भएको थियो ।

अन्तर्मुख भएर आत्मामा, आफूमा, ब्रह्ममा रमाउन थालेको विशुद्ध चित्तलाई विचारद्वारा, जीवात्मा र परमात्माको ऐक्यज्ञानद्वारा चैतन्य नै बनाउनुपर्छ । आफूलाई मर्ने-जन्मने, सुखी-दुःखी, पुरुष-स्त्री, ब्राह्मण-क्षत्री, धनी-गरीब भन्ने सीमित र संकुचित भावनाबाट माथि उठाएर म त ब्रह्म पो रहेछु, जीव होइन भनी भिन्नदेखि दृढतापूर्वक स्वीकार गर्नुलाई ब्रह्मज्ञान भन्दछन् । यसरी ज्ञानद्वारा आवरणदोष (स्वरूपको साक्षात्कार हुन नदिने अज्ञान वा भ्रमज्ञान) नष्ट हुन्छ र हिजोसम्मको जीवन आज शिव हुन्छ; हिजोसम्मको दुःखी मान्छे आज अखण्ड आनन्दमा चुर्लुम्म डुबेको ब्रह्म पो हुन्छ । वेद, उपनिषद् आदि हाम्रा मोक्षपरक शास्त्रहरूले बताउन खोजेको, देखाउन खोजेको यही बाटो हो । वेदले संसारको, भूगोलको, इतिहासको ज्ञान गराउन खोजेको छैन । केवल ब्रह्मको मात्र ज्ञान गराउन खोजको छ । हाम्रा पूर्वाचार्यहरूले, ज्ञानीहरूले, जीवन्मुक्त अमरात्मा, विमलात्मा, शुद्धात्मा, महात्माहरूले बताउनुभएको र आफ्नो अनुभवले पनि स्वीकार गरेको यही मार्ग हो, यही गन्तव्य हो, यही नै मानव जीवनको लक्ष्य र परमपुरुषार्थ हो ।

**नन्य पन्था विद्यतेऽयनाय ।**

(शुक्लयजुर्वेद ३१ अ. १८ मन्त्र)

परमपद, कैवल्यमोक्ष लाभका निमित्त ब्रह्मात्मैक्यबोध गर्नु बाहेक अर्को बाटो नै छैन । सूर्यमण्डलरूपी ब्रह्माण्डमा रहेका आत्मरूप पुरुषको अर्थात् आफ्नो ज्ञानले वा आफूले आफूलाई ब्रह्म हुँ भन्ने ज्ञानले मात्र मोक्षलाभ हुन्छ ।

आफूलाई शरीर, इन्द्रिय, मन, बुद्धि, चित्त, अहंकार, विशिष्ट कर्ता, भोक्ता, ज्ञाता हुँ भनुन्जेल न दुःखको सर्वथा अभाव हुन्छ, न त अखण्ड, परिपूर्ण, निरतिशय शान्ति र आनन्दकै अनुभूति हुन्छ । अतः आजैदेखि ब्रह्मज्ञानको मार्ग अवलम्बन गरी मनसा, कर्मणा, वाचा नित्य, निरन्तर वेदादि, उपनिषद्, गीता आदि शास्त्रले बताएअनुसार ज्ञानवान्, जीवन्मुक्त गुरुका आश्रयमा बसेर उहाँलाई नै आधार बनाएर मोक्षमार्गमा लागे अवश्य यही जीवनमा आत्यन्तिक कल्याण हुन्छ । यसमा सन्देह छैन ।

**-शिवमस्तु-**

**'शिवमन्दिर' शान्तिकुना, ललितपुर-५**

# ज्योतिष र मानव जीवनको तादात्म्य सम्बन्ध

उपेन्द्रप्रसाद भट्टराई

आकाशीय ज्योतिपिण्डका आधारमा यस संसारमा रहने समस्त स्थावर जङ्गम प्राणीहरूमा शुभाशुभ निर्णय गर्ने शास्त्र नै ज्योतिषशास्त्र हो । 'ज्योति' शब्दको अर्थ बलेको, अन्धकाररहित भन्ने लाग्छ । अन्धकार नै वास्तवमा अज्ञान हो अनि यही जगत्मा रहेका प्राणीहरूमा श्रेष्ठ प्राणी मानव वा मान्छे हो । ज्ञानका कारण नै मानिस सबै प्राणीमा श्रेष्ठ कहलाउँछ, उच्च श्रेणीमा गनिन्छ । ज्ञान नै उज्यालो हो, बलेको हो र अन्धकाररहित हो । यसैले ज्योतिःशास्त्र र मानवबीच सृष्टिको सुरुदेखि नै घनिष्ठ सम्बन्ध रहेको पाइन्छ । यिनै आकाशीय पिण्डहरूको किरण, नजिक टाढाको स्थितिबाट यो जगत् प्रभावित भएको पाइन्छ ।

सृष्टिको पहिलो अवस्थामा जलैजल थियो र यसमा अन्धकार व्याप्त भएकोले अन्धकार नाश गरी प्रकाशको सञ्चार गरी जीवनको उत्पत्ति गराउने उद्देश्यले सूर्यको उदयपश्चात् सर्वत्र जीवको सत्ता रहन थाल्यो र जीवहरूमा स्वस्थिति एवं बलको शक्तिको आभास मिल्न गयो । यही सूर्यबाट नै सम्पूर्ण ग्रह, तारा, नक्षत्रहरूको उत्पत्ति भयो । यी समस्त प्रमाण ज्योतिषीय सम्बद्ध ग्रन्थहरूमा पाइन्छन् ।

यही सूर्य जब पृथ्वीको क्षितिजमा देखिन्छ तब सम्पूर्ण प्राणीहरूमा जागा हुने अवस्थिति आउँछ । जब मध्याकाशमा पुग्दछ तब सम्पूर्ण जगत् आ-आफ्नो दैनिक क्रियाकलापमा संलग्न हुन्छन् । जब आफ्नो दृष्टिमा टाढा रहन पुग्छ तब फेरि स्वस्वस्थानमा आई विश्राम लिने गर्दछ । यति मात्र नभई श्वास-प्रश्वासबाहेक सम्पूर्ण इन्द्रियहरू पनि विश्रामार्थ निद्रामा संलग्न हुन्छन् र प्राणीहरू रात्रिमा निदाउने गर्दछन् ।

यही सूर्यको आकाश भ्रमण गर्ने एक मार्गको कल्पना गरिएको छ त्यसलाई क्रान्तिवृत्त भनेर चिनिन्छ । यसमा घडीमा १२ भाग लगाए झैँ गरिकन १२ भाग लगाइएको छ । प्रत्येक भागलाई १ राशि भनिन्छ र १२ राशि १२ भागमा कल्पना गरिएको छ । जब सौरसावनमानले १ राशि पूरा गर्दछ तब एक सौरमास पूर्तिकाल प्राप्त हुन्छ । यसरी १ राशिबाट अर्को राशिमा जाने काललाई सङ्क्रमण वा सङ्क्रान्तिकाल भनेर चिनिन्छ । यस्ता सङ्क्रान्तिहरू मेष, वृष, मिथुन, कर्कट, सिंह, कन्या, तुला, वृश्चिक, धनु, मकर, कुम्भ, मीन गरी १२ वटा छन् । यसले हाम्रो

संस्कृतिमा ठूलो महत्त्व राखेको पाइन्छ । जस्तो माघे सङ्क्रान्ति, साउने सङ्क्रान्ति । यी दुई सङ्क्रान्तिमा अयन फिर्ने भएकोले विशेष महत्त्व रहेको पाइन्छ ।

यसपछि चन्द्रमा मनको कारक तत्त्व मानिन्छ । चन्द्रको आधारमा गणना गर्ने पद्धतिलाई चान्द्रपद्धति भनिन्छ । यसअनुसार चित्रा नक्षत्रले युक्त पूर्णिमा भएको मासलाई चैत्र महिना भनिन्छ । विशाखा नक्षत्रले युक्त पूर्णिमा भएको मासलाई वैशाख भनेर चिनिन्छ । यस्तै ज्येष्ठायुक्त ज्येष्ठ, आषाढयुक्त असार, श्रवणयुक्त साउन, भाद्रपदायुक्त भदौ, अश्विनीयुक्त असोज, कृत्तिकायुक्त कार्तिक, मृगशीर्षयुक्त मङ्सीर, पुष्ययुक्त पौष, मघायुक्त माघ र फाल्गुनीयुक्त फागुन नामले प्रसिद्ध छन् ।

यसैगरी, अन्य ग्रहहरूको सम्बन्ध पनि हाम्रो दैनिक क्रियाकलापमा रहेको पाइन्छ । जस्तो सातबारहरू । यी सातबारहरू यो-यो दिनमा पर्दछ भनेर ज्योतिषज्ञहरूले नभन्ने हो भने हाम्रो दैनिक जीवनमा विदा दिने (सरकारी कार्यालयमा), शिक्षण संस्थामा इत्यादि कार्यमा कठिनाई उत्पन्न हुन्छ । तसर्थ, सातबारहरूमा आइत, सोम, मङ्गल, बुध, बिही, शुक्र र शनि क्रमैले आउनुमा के कारण हो, यसबारे जानकारी गरौँ । यसको उत्तर पनि ज्योतिषीय ग्रन्थहरूका आधारमा नै दिने चेष्टा गरिन्छ–

पृथ्वीदेखि सबैभन्दा नजिक चन्द्र, त्यसभन्दा माथि बुध, तत्पश्चात् शुक्र, तदनु रवि (सूर्य), तदनु मङ्गल, तदनु बृहस्पति, तदनु शनि कक्षा रहेका छन् । सूर्य सिद्धान्तका अनुसार शनिदेखि तल्लो कक्षा क्रममा चौथो चौथो ग्रह बारेश हुने गर्दछ । यसैले, शनिदेखि चौथो कक्षा सूर्यको भएकोले पहिलो रविवार, फेरि सूर्यदेखि चौथो चन्द्र भएकोले सोमबार, यसैगरी चन्द्रदेखि चौथो भौम; भौमदेखि चौथो बुध, बुधदेखि चौथो बृहस्पति, बृहस्पतिदेखि चौथो शुक्र, शुक्रदेखि चौथो शनि भएकोले क्रमशः मंगलबार, बुधबार, विहीबार, शुक्रबार, शनिबार पर्दै आउँछन् ।

**आकाशीय ज्योतिपिण्डका आधारमा यस संसारमा रहने समस्त स्थावर जङ्गम प्राणीहरूमा शुभाशुभ निर्णय गर्ने शास्त्र नै ज्योतिषशास्त्र हो । 'ज्योति' शब्दको अर्थ बलेको, अन्धकाररहित भन्ने लाग्छ । अन्धकार नै वास्तवमा अज्ञान हो अनि यही जगत्मा रहेका प्राणीहरूमा श्रेष्ठ प्राणी मानव वा मान्छे हो । ज्ञानका कारण नै मानिस सबै प्राणीमा श्रेष्ठ कहलाउँछ, उच्च श्रेणीमा गनिन्छ । ज्ञान नै उज्यालो हो, बलेको हो र अन्धकाररहित हो । यसैले ज्योतिःशास्त्र र मानवबीच सृष्टिको सुरुदेखि नै घनिष्ठ सम्बन्ध रहेको पाइन्छ । यिनै आकाशीय पिण्डहरूको किरण, नजिक टाढाको स्थितिबाट यो जगत् प्रभावित भएको पाइन्छ ।**

यसरी दैनिक जीवनको अभिन्न अङ्गका रूपमा रहेका बारहरूका स्वामी ग्रह त्यही त्यही बार सम्बद्ध ग्रहहरू मानिन्छन् । यी ग्रहहरूमा रहेका पञ्चतत्त्व आदिले हाम्रो शरीरमा पनि विशेष भूमिका निभाएका हुन्छन् । सूर्य आत्मतत्त्व, चन्द्र मनतत्त्व वा तेजतत्त्वयुक्त, सूर्य र तेजप्रवाहित जलतत्त्वयुक्त चन्द्र रहेको छ । जसले शरीर वृद्धि, कान्ति, मनस्थिरता, हाड, आँखा दृष्टिमा प्रमुख भूमिका खेलेको हुन्छ । त्यस्तै, मङ्गल, बुध, बृहस्पति, शुक्र, शनि क्रमशः तेज, पृथ्वी, आकाश, जल र वायु तत्त्वयुक्त ग्रह मानिन्छन् । हामीमा रहेका पञ्चभौतिक शरीरमा आफ्नो तत्त्वसँग सजातीयत्व कायम गर्न प्रयत्नशील रहन्छन् । यदि यी जुन तत्त्वसँग सम्बन्ध राख्दछन् ती तत्त्वको कमीमा यी ग्रहको दोष देखिन्छ र तत्सबद्ध तत्त्व पूर्ति हुने क्रिया गरेमा शरीर तत्त्वसंपुत हुन जान्छ । जस्तो पृथ्वीको सम्बन्ध छालामा रहने भएकोले छालाको दोष देखिएमा बुधको कारकत्व मान्न सकिन्छ । वायुतत्त्वको असरमा शनिको दोष देखिन्छ । जोर्नीको दुखाइ, नसासम्बन्धी रोग लाग्नुमा शनिको दोष देखिन्छ ।

यसरी कारकत्व पहिचान गरी उपचार गराउन, गर्न सिकाउने शास्त्र ज्योतिषशास्त्र हो । ज्योतिषशास्त्रको आधार ज्योतिर्मय पिण्डको वास्तविक अवस्थिति हो । यही अवस्थितिको वास्तविक परक्षनार्थ पूर्ण आकाशलाई बाह्र भागमा विभाजन गरी लग्नकुण्डली वा राशिकुण्डलीको निर्माण गरिन्छ । यही कुण्डली वा चक्रमा शरीर, धन, बुद्धि, विद्या, शत्रुमित्र, स्वास्थ्य, भाग्य, मातृसम्बन्ध, दाजुभाइको सम्बन्ध, विदेशयात्रा, व्यवसाय इत्यादि विषयमा विवेचना गर्न सकिन्छ । नयनरूपशास्त्र ज्योतिषशास्त्र भएकोले अगाडि बढ्नमा वा अज्ञानताबाट ज्ञानमय प्रकाशको बाटोमा अग्रसर हुन सिकाउने शास्त्र पनि ज्योतिषशास्त्र हो । यही सत्यतथ्यलाई अनुसरण गर्नु हाम्रो संस्कृतिको जगेर्ना गर्नु पनि हो ।

यस्तै क्रममा धेरै वर्ष बित्दै जाँदा नूतन वर्ष २०६५ को आगमन पनि भएको छ । वसन्तादि ऋतुको आगमन भएको छ । सर्वत्र वृक्षादिमा नयाँ जीवनपद्धति छाएको छ । मैला पुराना पातहरू झरेर नयाँ प्रवाल पत्रहरूले स्थान पाएका छन् । नयाँ-नयाँ आवाजमा वन्यपंक्षीहरू उद्घोष गरिरहेका छन् । आ-आफ्नो जीवनपद्धतिलाई परिवर्तन गराइरहेका छन् । वास्तवमा भन्नु पर्दा 'जगत्'को अर्थ सान्दर्भिक हुन गएको छ । यसबाट हामीमा शिक्षा मिलेको छ । पुराना, नराम्रा, अज्ञानका कुराहरूलाई फाली राम्रा, नयाँ, ज्ञानयुक्त कुराहरू सिकौँ । ज्ञान, विवेक, बुद्धिको प्रयोग गरौँ । शान्तिको उद्घोष फैलाऔँ । हत्या हिंसाको जञ्जालबाट मुक्त हुने बाटो रोजौँ । '**वसुधैवकुटुम्बकं**'को भावनालाई मान्यता दिने गरौँ र अन्त्यमा सर्वत्र सबैको जीवनमा उत्तरोत्तर प्रगति, दीर्घायु एवं सफलता मिलोस् भन्ने शुभेच्छाका साथ समस्त पाठकवर्गमा स्वागत् गर्दै लेखनी बन्द गर्ने कार्य गर्दछु ।

**वाल्मीकि विद्यापीठ**
**फ. ज्यो. आ. म. सं. विभाग**

# ब्रह्माण्डीय शाश्वत सत्य

जसरी खाना बनाउने कला सिक्नलाई हामीलाई सिकाउने मानिसको आवश्यकता पर्दछ, जसरी विज्ञान सिक्नका लागि प्राध्यापकको आवश्यकता पर्दछ, जसरी कुनै पनि कला सिक्नका लागि हामीलाई गुरु चाहिन्छ, त्यसरी नै आत्मविद्या सिक्नका लागि पनि हामीलाई गुरुको आवश्यकता मात्र होइन, अनिवार्यता र जरुरी पर्दछ ।

संसार सागरबाट पार लगाउन गुरु मात्र एक आधार हुनुहुन्छ। सत्यको संकटमय मार्गमा हामीलाई गुरुले बाहेक उचित मार्गनिर्देशन अरुले गर्न सक्दैन ।

हाम्रा दैनिक जीवनको सङ्ग्राममा गुरु हामीलाई मार्गनिर्देशन दिनुहुन्छ र हामीलाई रक्षण गर्नुहुन्छ। जसमा आत्मा विषयक ज्ञान छ, शास्त्रहरूमा जो पारंगत हुनुहुन्छ, जो तमाम उत्कृष्ट गुणबाट युक्त हुनुहुन्छ, उहाँ सद्‌गुरु हुनुहुन्छ ।

शिष्यका लागि गुरुको पूजा गर्नका लागि गुरुवार पवित्र दिन हो ।

गुरु ज्ञानका पथप्रदर्थक हुनुहुन्छ र उहाँको कृपाको परिणाम अद्‌भूत हुन्छ ।

गुरु, ईश्वर, ब्रह्म, आचार्य, उपदेशक, दैवी गुरु आदि सबै समानार्थी शब्द हुन् ।

ईश्वरलाई प्रणाम गर्नुभन्दा पहिले गुरुलाई प्रणाम गर्नुपर्दछ किनकि उहाँले हामीलाई ईश्वरसम्मुख लानुहुन्छ ।

आफ्नो गुरुबाट मन्त्र दीक्षा लिनुपर्दछ। यसबाट हामीलाई सत्प्रेरणा मिल्दछ र हामी उच्च स्थितिमा पुग्न सक्छौँ ।

गुरु हाम्रो सट्टामा साधना गर्नुहुन्न । साधना त हामी आफैले गर्नुपर्ने हुन्छ ।

गुरु हामीलाई सच्चा बाटो देखाउनु हुन्छ ।

गुरुकृपाबाट शिष्य आफ्नो मार्गमा स्थित विघ्न एवं संशयहरूलाई पार गर्न सक्दछ ।

गुरु शिष्यलाई भयस्थान र बन्धनहरूबाट पनि पार गर्नुहुन्छ ।

आफ्ना गुरुको सेवा गर्नका लागि आफ्नो प्राण एवं शरीरको बलिदान दिन तैयार भएर बस्नुपर्दछ, तब उहाँले हाम्रो आत्मा सम्हाल्नुहुन्छ ।

गुरुले हामीलाई उठाएर समाधिमा राखिदिनु हुन्छ, यस्तो चमत्कारको अपेक्षा गुरुसँग राख्न हुँदैन । हामी स्वयंले कठिन साधना गर्नुपर्दछ ।

यदि हामीलाई सद्‌गुरु प्राप्त हुँदैन भने हामी आध्यात्मिक मार्गमा अघि बढ्न सक्दैनौं ।

आफ्ना गुरुको इच्छालाई सोची सम्झी धैर्यले गर्नुपर्दछ किनकि पछि हामी गुरुबाट अलग हुन सक्दैनौं । अलग हुनु ठूलोभन्दा ठूलो पाप हो ।

गुरु शिष्यको सम्बन्ध पवित्र एवं जीवनपर्यन्तको हो । यस कुरालाई ठीक रीतिले बुझ्नु पर्दछ ।

जसलाई आत्म-साक्षात्कारी गुरु प्राप्त हुन्छ त्यो वास्तवमा तीन गुणा भाग्यशाली हुन्छ ।

गुरुको परीक्षा लिनु सम्भव छैन । एक कबीर नै अरु कबीरलाई चिन्न सक्दछ । आफ्नो गुरुमा ईश्वरका गुणलाई आरोपण गर्नुपर्दछ । तब हामीलाई लाभ हुन्छ ।

गुरुको समीप जानका लागि हामीलाई योग्य हुन आवश्यक छ । हामीमा वैराग्यको भावना, विवेक, गाम्भीर्य, आत्मसंयम एवं सदाचारजस्ता गुण हुनुपर्दछ ।

यदि हामीले 'राम्रा गुरु हुनुहुन्न' भन्यौं भने गुरुले पनि भन्नुहुनेछ 'राम्रा शिष्य छैनन्'। हामीले शिष्यको योग्यता प्राप्त गर्नासाथ हामीलाई सद्गुरुको योग्यता, महत्ता महसुस हुन र बुझ्न थाल्छौं ।

गुरु हाम्रा उद्धारक एवं संरक्षक हुनुहुन्छ, सदैव उहाँको पूजा गर्नुपर्दछ, उहाँको आदर गर्नुपर्दछ ।

जो सत्, चित् र परमानन्दस्वरूप हुनुहुन्छ, यस्ता गुरुलाई सदा साष्टाङ्ग प्रणाम

गर्नुपर्दछ ।

शिष्यले आफ्नो गुरुको मूर्तिलाई सदा स्मरण गर्नुपर्दछ, गुरुको पवित्र नामको सदा जप गर्नुपर्दछ, उहाँको आज्ञाको पालन गर्नुपर्दछ । यसैमा साधनाको रहस्य निहित रहेको हुन्छ ।

शिष्यले गुरुको पूजा गर्नुपर्दछ किनकि उहाँभन्दा ठूलो अरु कोही छैन ।

गुरुको चरणामृतले शिष्यको तृषा शांत गर्न सक्दछ ।

हामीले ध्यान गर्न बस्दा सधैं आफ्नो गुरु र पूर्वका सबै सन्तहरूको स्मरण गर्नुपर्दछ । हामीलाई उहाँहरूको आशीर्वाद प्राप्त हुन्छ ।

शास्त्र एवं गुरुद्वारा निर्दिष्ट शुभ कर्म गर्नुपर्दछ ।

शान्तिको मार्ग देखाउनका लागि गुरु अनिवार्य हुनुहुन्छ ।

गुरुको पूजा गरेर सधैं उहाँको स्मरण गर्नुपर्दछ । यसबाट हामीलाई सुख प्राप्त हुन्छ ।

हामीले शास्त्र, गुरुको शब्द, ईश्वर र आफैमाथि विश्वास राख्नुपर्दछ ।

कुनै पनि प्रकारको फलको अपेक्षाबाट रहित भएर गुरुसेवा गर्नु सर्वोच्च साधना हो । गुरुसेवाले महान शुद्धि गर्दछ ।

जति भक्ति भावना प्रभुप्रति राख्नुपर्दछ, त्यति नै गुरूप्रति राख्नु पर्दछ, तब मात्र सत्यको अनुभूति हुन्छ ।

सदैव एउटै गुरुमा लागिरहनु पर्दछ ।

ईश्वर आदि गुरु हुनुहुन्छ जसलाई स्थान एवं समय (देश-काल) को सीमाले बाँध्न सक्दैन । एक शाश्वत युगबाट अर्को शाश्वत युगसम्म उहाँ समस्त मनुष्य जातिका गुरु हुनुहुन्छ ।

कुण्डलिनी शक्तिलाई त्यसको सुषुप्त अवस्थाबाट जागृत गर्नका लागि गुरुको अनिवार्य आवश्यकता पर्दछ ।

अहंभावको नाश गर्नाले शिष्यत्वको शुरुआत हुन्छ ।

शिष्यत्वको कुँजी हो– ब्रह्मचर्य र गुरुसेवा ।

शिष्यत्वको चिनारी हो– गुरुभक्ति ।

गुरुको चरणकमलमा आजीवन आत्मसमर्पण गर्नु शिष्यत्वको निशानी हो ।

गुरुदेवको मूर्तिको नियमित ध्यान गर्नु शिष्यत्वको राजमार्ग हो ।

गुरु महाराजप्रति सम्पूर्णत: आज्ञापालनको भाव राख्नु शिष्यत्वको चिनारी हो ।

गुरुसँग मिल्ने उत्कट इच्छा र उहाँको सेवा गर्ने तीव्र आकांक्षा मुमुक्षुत्वको चिनारी हो ।

सच्चा गुरु सधैं शिष्यको अज्ञानको नाश गर्न र उसलाई उपनिषद्को ज्ञान दिन संलग्न रहनुहुन्छ ।

अध्यात्म मार्गमा सकुशल, दृढतापूर्वक अघि बढ्नका लागि गुरुद्वारा नै शिष्यलाई सूचना प्राप्त हुन्छ ।

आफ्नो गुरुको इच्छाको शरण हुनुपर्दछ, उहाँप्रति आत्मसमर्पित हुनुपर्दछ अनि मात्र हाम्रो उद्धार हुन सक्दछ ।

ईश्वर नै गुरुरूपमा देखिनुहुन्छ ।

योग्य शिष्यहरूलाई यशस्वी गुरु प्राप्त हुन्छ ।

ईश्वरको कृपाले गुरुको रूप लिन्छ ।

गुरु आफ्ना शिष्यलाई आफूजस्तै बनाउनुहुन्छ अत: उहाँ पारसभन्दा पनि महान् हुनुहुन्छ ।

गुरुले दृष्टि, स्पर्श, विचार वा शब्दद्वारा शिष्यलाई परिवर्तन गर्न सक्नुहुन्छ ।

गुरु र ईश्वर वास्तवमा एकरूप हुनुहुन्छ ।

गुरु यस संसारमा ईश्वरका सच्चा प्रतिनिधि हुनुहुन्छ ।

गुरूप्रतिको नि:स्वार्थ एवं भक्तिभावपूर्वक सेवा नै पूजा, भक्ति, प्रार्थना र ध्यान हुन् ।

दैवी एवं उत्तम गुण पसलबाट खरीद गर्ने वस्तु होइनन्, यी लामो समयसम्मको गुरुसेवा, श्रद्धा एवं भक्तिभावद्वारा नै प्राप्त

समस्त ग्रह नक्षत्र भएको विराट सत्तालाई ब्रह्माण्ड भनिन्छ। अनन्तकोटि ब्रह्माण्डमध्ये हामी बसेको ब्रह्माण्ड एउटा स्वरूप हो । अनन्तकोटि ब्रह्माण्डमा ब्रह्माण्ड बह्माण्ड मिलेर महाब्रह्माण्ड बन्दछ। सातवटा ब्रह्माण्ड मिलेपछि महाब्रह्माण्ड बन्दछ । देव र दानवको संयुक्त स्थूल र सूक्ष्म अस्तित्व भएको सम्पूर्ण भाग नै ब्रह्माण्ड हो । ब्रह्माण्डलाई मानवदेहको सहस्रारबाट सम्पर्क स्थापित गर्न सकिन्छ । वेदले उल्लेख गरेसम्मको स्थानलाई ब्रह्माण्ड भनिन्छ। मन्त्र र अमन्त्र विलय हुने र प्रकट हुने स्थान नै ब्रह्माण्ड हो ।

गर्न सकिन्छ ।

गुरु दक्षिणबाट असंख्य पापहरूबाट मुक्ति मिल्दछ ।

गुरुलाई दक्षिणा दिने बानी बसाउनु पर्दछ ।

जुन दक्षिणा गुरुलाई दिइन्छ त्यो व्यवहारु प्रेमको प्रतीक हो ।

सबै गुरुभाइहरूको कल्याणका लागि उदार भावना विकसित गर्नुपर्दछ ।

शिष्यको कर्तव्य गुरुको आदेशलाई बफादारीपूर्वक एवं अविलम्ब पालन गर्नु हो । गुरुको सेवाको अर्थ हो– गुरूप्रति आत्मसमर्पण ।

उच्चात्मा गुरुको कृपाद्वारा नै शिष्यको हृदयमा विवेकबुद्धि उदय हुन्छ ।

जसलाई नैसर्गिक विवेकबुद्धि प्राप्त हुन्छ, त्यसलाई अवश्य गुरुकृपा मिल्दछ ।

आफ्नो गुरूप्रति गरिएको सेवा नैतिक कर्तव्य हो, आध्यात्मिक 'टनिक' हो जसबाट मन एवं हृदय दैवी गुणहरूबाट भरपूर हुन जान्छ ।

सच्चा शिष्यलाई आफ्नो हृदयको कुनामा आफ्नो सम्माननीय गुरुको चरणकमलको प्रतिष्ठा गर्नुपर्दछ ।

जो शिष्य अन्य कसैको विचार नगरीकन एकाग्र मनबाट केवल आफ्ना गुरुको नै पूजा गर्दछ, त्यो श्रेष्ठ शिष्य हो ।

अरुलाई गुरुभाइ बनाएर आफ्ना गुरुको यश बढाउने गुरुभक्ति विकसित गर्ने राजमार्ग हो ।

हामी यदि महान् विद्वान् एवं धनवान भए पनि गुरु एवं महात्माहरूका समक्ष अत्यन्तै नम्र हुनुपर्दछ ।

शिष्य अधिक विद्वान छैन भने पनि त्यो मूर्तिमंत नम्रताका स्वरूप छ भने गुरुको उसप्रति अत्यन्त प्रेम रहन्छ ।

जो मानिस वफादार एवं बिलकुलै नम्र बन्छ भने उसमाथि गुरुकृपा हुन्छ ।

गुरुको चरणकमलको पूजाका लागि नम्रताको फूलका अतिरिक्त अन्य कुनै श्रेष्ठ पुष्प छैन ।

सद्गुरुमा दृढ श्रद्धा आत्माको उन्नति गर्दछ, हृदयलाई शुद्ध गर्दछ एवं आत्म-साक्षात्कारतर्फ लैजान्छ ।

दम्भी शिष्य गुरुको आज्ञा भयको कारण मान्दछ भने सच्चा शिष्य प्रेमका कारण शुद्ध प्रेमबाट गुरुको आज्ञाको पालन गर्दछ ।

हामीमा भाव एवं तत्परता छ भने गुरु हामीबाट चढाइएको कुराबाट प्रसन्न हुनुहुनेछ, चढाइएका वस्तुको प्रकारबाट होइन ।

शिष्यले अत्यन्तै तत्परता र ध्यान दिएर आफ्नो गुरुको सेवा गर्नुपर्दछ ।

जब हामी कुनै महान गुरुका शिष्य हौं भने अन्य कसैलाई आफ्नो शिष्य बनाउनु हुँदैन र स्वयं गुरु बन्ने प्रयास पनि गर्नुहुँदैन । उनीहरूलाई आफ्ना गुरुभाइ मान्नुपर्दछ ।

गुरु र शिष्यलाई जोड्ने जुन शक्ति छ, त्यो शुद्ध प्रेम हुनुपर्दछ ।

शिष्यले आफ्नो सम्पूर्ण जीवनमा गुरुको यशको झण्डा फहराउनु पर्दछ ।

गुरुकृपा अणुशक्तिभन्दा पनि बढी शक्तिशाली हुन्छ ।

शिष्यमाथि जुन आपत्तिहरू आउँछन्, त्यो लुकेको वेशमा गुरुको आशीर्वादसमान हुन् ।

नम्रतापूर्वक, स्वेच्छापूर्वक, संशयरहित भएर, बाह्य आडम्बरबिना, द्वेषरहित भएर, असीम प्रेमबाट आफ्ना गुरुको सेवा गर्नुपर्दछ ।

पृथ्वीमा साक्षात् ईश्वरस्वरूप गुरुको चरणकमलमा आत्मसमर्पण गर्दा गुरुले भय स्थानहरूबाट हाम्रो रक्षा गर्नुहुन्छ, हाम्रो साधनामा हामीलाई प्रेरणा दिनुहुन्छ तथा अन्तिम ध्येयसम्म हाम्रो पथप्रदर्शक बन्नुहुन्छ ।

गुरूप्रतिको श्रद्धा एउटा यस्तो चीज हो जुन प्राप्त गरेपछि अन्य प्राप्त गर्न बाँकी रहँदैन ।

श्रद्धाद्वारा निमेष मात्रमा हामी परम पदार्थ पाउन सक्षम हुन्छौं ।

गुरुको वचन एवं कर्ममा श्रद्धा राखौं, श्रद्धा राखौं, श्रद्धा राखौं। गुरुभक्ति विकसित गर्ने यही मार्ग हो ।

जय गुरुदेव !

तन्त्रविद्याप्रति सर्वसाधारणको एउटा आरोप छ– तन्त्रविद्याबाट तत्त्व ज्ञान हुँदैन । यो एउटा झारफुके विद्या हो, टुनामुना गर्ने गराउने मन्त्रहरू यसमा पाइन्छन् । यसले परम पुरुषार्थ मोक्ष प्रदान गर्दैन भन्ने जनसाधारणको धारणा रहेको पाइन्छ । फेरि तन्त्रविद्यामा मारण, मोहन, उच्चाटन, वशीकरण, स्तम्भन, विद्वेषन यी अभिचार कर्मको प्रतिपादन भएको र यस्ता साधनाका निम्ति मत्स्य, मांस, मदिरा, मुद्रा र मैथुन यी पञ्चमकारको प्रयोग हुने हुनाले यो विद्या अशुद्ध विद्या हो भन्ने पनि धेरैको विश्वास रहेको पाइन्छ । तर यो आंशिक सत्य मात्र हो । फेरि त्यो कुरा तन्त्र विद्याको प्रमुख उद्देश्य नभइकन गौण उद्देश्य मात्र हो । उक्त कुरा तन्त्र विद्यामा नपाइने त होइन, पाइन्छ । तन्त्र विद्या विशाल शास्त्र भएकोले यस्तो सागरभित्र राम्रा कुरा पनि छन्, नराम्रा कुरा पनि । जसले जे कुरा खोजे पनि यहाँ पाइन्छ । जनु उद्देश्यले पनि तन्त्र साधना गर्न सकिन्छ तर तन्त्रको प्रधान उद्देश्य चाहीँ त्यो हुँदै होइन । स्वार्थ सिद्ध त एउटा गहन उद्देश्य हुन सक्दछ तर प्रधानको होइन । यो त शास्त्र अस्त्रसमान विद्या हो । यस प्रयोग भलोका लागि पनि गर्न सकिन्छ, कुभलोका लागि पनि । तर कुभलो चिताएर यसको प्रयोग गर्नेको फल राम्रो कदापि हुन सक्दैन र भलोको फल जहिले पनि राम्रो मात्र हुन्छ यो सत्य हो ।

श्रीमद्भागवत्गीतामा भनिएको छ–

**'न हि कल्याणकृत् कञ्चिद् दुर्गतिं तात गच्छति'** । अर्थात् कल्याण चिताएर जसले राम्रो कर्म गर्दछ उसको दुर्गति हुन सक्दैन । तर यो पनि सत्य हो कि अर्काको दुर्गति चाहेर कर्म गर्ने व्यक्तिको आफ्नै दुर्गति हुन्छ, हुन्छ । यसमा पनि शङ्का छैन । यो अनुभवसिद्ध पनि छ ।

त्यसो भए तन्त्रविद्याको मूल उद्देश्यचाहिँ के हो त ? यसको उद्देश्य स्पष्ट छ– ब्रह्मज्ञान । त्यसैले यो मोक्षशास्त्र हो । ब्रह्मविद्या हो ।

ज्ञानले मोक्ष पाइन्छ, ज्ञानले पापको नाश हुन्छ, ज्ञानैबाट पशु, वीर दिव्यभाव प्राप्त हुन्छ । त्यसैले ज्ञानको वैशिष्ठ्य महान छ, ज्ञान स्वयं पवित्र छ र यसले समस्त वस्तुलाई पवित्र पार्दछ । आगोले काठपात सबै कुरा जलाइदिएजस्तै ज्ञानले सम्पूर्ण कर्मफललाई दग्ध गर्दछ ।

ज्ञान पनि दुई प्रकारका छन् । भेदात्मक र अभेदात्मक । भेदज्ञानले गरिएको कर्मले पुण्य र पाप प्रदान गर्दछ र यसबाट संसारचक्र चलिरहेको हुन्छ । तर अभेदज्ञानले पूर्व आर्जित कर्म पनि नष्ट हुन जाने हुन्छ र यसबाट मुक्ति प्राप्त हुन सक्छ । नत्र युगानुयुगसम्म, स्वर्गनरक आदि प्राप्त गराउने भेदात्मक कर्मबाट भवचक्रमा घुमिरहनुपर्ने हुन सक्छ । मुण्डमालातन्त्रको छैठौं पटलमा अद्वैतज्ञानको महत्त्व बताइएको छ ।

जहाँसम्म आत्मभाव आउँदैन त्यहाँसम्म भेदभाव रहन्छ, भिन्नभिन्न क्रिया हुन्छन् । देवता भिन्नभिन्न मानिन्छन् । ब्रह्मा, विष्णु, महेश्वर, गणेश, सूर्य, अग्नि, वरुण, कुबेर, दिक्पाल अनन्त देवदेवताहरूको उपासना भैरहन्छन् । स्त्रीपुरुष, नपुंसक आदि भिन्नभिन्न चेष्टाहरू हुन्छन् । उपचारहरू देवतापिच्छे बेग्लाबेग्लै मान्नुपर्ने हुन्छ । भाव भिन्नभिन्न हुन्छन् पशु, वीर र दिव्य, काली, तारा, षोडशी आदि महाविद्यामा पनि भेद हुन्छ । अनन्त देवता, अनन्त उपचार, अनन्त कर्म । तन्त्रज्ञान उत्पन्न भएपछि अभेदात्मक तत्त्वज्ञानको दृष्टि उदित भएपछि सर्वत्र ऐक्यभाव जाग्दछ । देवताहरूमा भेद रहँदैन, आराधनाका उपचारमा नानात्व छैन, क्रियामा भिन्नता छैन । भक्ति पनि अव्यभिचारिणी भक्ति उदित भएपछि सर्वज्ञ परब्रह्म परमात्माको भावना हुन्छ । अनि त पाप र पुण्यको जन्मै नभएपछि स्वर्ग, नरक आदि पनि हुँदैनन् र तात्त्विक ज्ञानबाट कैवल्य मात्र प्राप्त हुनजान्छ र यी वस्तुतः तन्त्रशास्त्रको वास्तविक प्रयोजन मूल उद्देश्य हो । तन्त्र ब्रह्म विद्या हो । यसको समुचित प्रयोगपरक साधनाबाट सुख, दुःख, रोग, शोक, भयरहित भएर ब्रह्ममय जगत्को भाव जागृत हुन्छ र ब्राह्मी विद्याको प्राप्तिबाट भवबन्धनबाट मुक्त हुन सकिन्छ ।

**तत्वज्ञानात् परं नास्ति नास्ति देवः सदाशिवात् ।**

**तदैऽवाचिरकालेन सोऽहं ज्ञानं प्रजायते ॥**

**नानात्व बुद्धिंकृत्वा वै सात्विकीं परमात्मिकाम् ।**

**गृहीत्वा च वरारोह जायते परमार्थविद् ॥**

**ज्ञानात् परतरं नास्ति नास्ति नास्ति वरानने ।**

# तन्त्रः ब्रह्माण्डीय विद्या

**लब्ध्वा हि तत्वं परमं मुच्यते देहबन्धनात् ॥**

**ब्रह्मविद्यासमा विद्या ब्रह्मविद्यासमा क्रिया ।**

**ब्रह्मविद्यासमं ज्ञानं नास्ति नास्ति कदाचन ॥**

यो हो तन्त्रविद्याको मूल प्रयोजन ।

कर्म दुई प्रकारका छन्– प्रवृत्तिपरक र निवृत्तिपरक ।

यी दुई मार्गहरू क्रियामार्ग र क्रियासंन्यासमार्ग हुन् । यौटाले संसार प्रदान गर्दछ र अर्कोले रीस । महानिर्वाणतन्त्रको १४ उल्लासमा भनिएको छ– ब्रह्मदेखि लिएर तृणपर्यन्तको यो जगत् वस्तुतः मायाले नै कल्पना गरिएको हो, वास्तविक सत्य सत्य त ब्रह्ममात्र हो, यही यौटै वस्तुलाई जानेर वास्तविक सुख, परम आनन्द प्राप्त गर्न सकिन्छ ।

**'ब्रह्मादितृणपर्यतां मायया कल्पितं जगत् ।**

**सत्यमेकं परं ब्रह्म विदित्वैवं सुखी भवेत् ॥**

**ब्रह्मैवाहमिति ज्ञात्वा मुक्तो भवति देहभृत् ।**

कुलार्णव तन्त्रको पञ्चम खण्डमा छ ।

**क्षणं ब्रह्माऽहमस्मीति यः कुर्यादात्मचिन्तनम् ।**

**कोटिजन्मार्जितं पापं तत्क्षणातस्य नश्यति ॥**

ब्रह्मज्ञान नै परमज्ञान हो । यो जसको चित्तमा विराजमान छ त्यसका निमित्त जप, यज्ञ, तपस्या, नियम, व्रतको महत्त्व गौण हुन्छ । सत्य, ज्ञान, विज्ञान, आनन्द एउटै ब्रह्मको स्वरूप हो स्वभावतः ब्रह्म भइसकेकालाई के को जप, के को ध्यान, के पुण्य, के पाप । ध्येय, ध्याता र ध्यान यसको त्रुपुटी नै रहँदैन । उसका लागि ब्रह्म नै जगत् हो र जगत् नै ब्रह्म हो ।

मुण्डमालातन्त्रको एघारौँ पटलमा त यतिसम्म भनिएको छ– तत्त्व परिज्ञान नहुने हो भने सबै पूजा, जप, तप आदि विफल हुन्छन् । देवता एउटै छन् । ती देवता भन्नु म नै हुँ । आत्मस्वरूप हुँ । शरीरले मात्र भिन्नता देखिने हो । समस्त देवताहरूको पूजाबाट तत्त्व ज्ञान नै हुने र यही मुक्तिको साधना हो ।

यसरी तन्त्रहरूमा तन्त्रविद्याको मुख्य प्रयोजन ब्रह्मज्ञान हो र यो मोक्ष साधन हो भन्ने कुरा अनेकौं प्रकारले प्रतिपादन गरिएको पाइन्छ । देवता तत्त्व भन्नु नै ब्रह्म तत्त्व हो । यसैको ज्ञान नै ज्ञानको पराकाष्ठा हो भन्ने कुरा दर्शाइएको देखिन्छ ।

यसका साथसाथै तन्त्रशास्त्रमा ब्रह्ममन्त्रको उपासना गर्ने तरिकाको पनि वर्णन भएको देखिन्छ ।

यौटा तन्त्रसाधनाका पथिकको दैनिकी पनि यतैतिर उन्मुख भएको हुन्छ । यसलाई अझ विस्तारमा हेर्नुपर्ने हुन्छ । त्यसो गर्दा देखिन्छ–

ब्रह्ममुहूर्तमा उठेर सबभन्दा पहिले ब्रह्मज्ञान प्रदान गर्ने गुरुलाई नमस्कार गरेर परब्रह्म परमात्माको ध्यान गर्दै उनैको

स्वभाव वर्णन गर्ने मूल मन्त्रको यथाशक्ति जप गरिन्छ । यही प्रातः कृत्य हो । यसमा अजपा गायत्रीको जप हुन्छ । अर्थात् मानव मात्रको श्वास-प्रश्वासले स्वयं यौटा मन्त्रको जप गरिरहेको हुन्छ । त्यसलाई विशेष प्रयत्न गरिरहनु पर्दैन । त्यसको ध्यानपूर्वक मनन हुन मात्र आवश्यक हुन्छ । त्यो मन्त्र हो हंस मन्त्र । हकारले श्वास बाहिर निस्कन्छ र सकारले भित्र तानिन्छ । यसरी हरेक श्वास प्रश्वासमा हं-सः सोऽहंको मन्त्र जप भइरहेको हुन्छ । साधकले यस मन्त्रको दिनभरिको जप गुरु, गणेश आदि देवतालाई समर्पण गरेर आफ्नो श्वास-प्रश्वास समेत देवतालाई समर्पित गरेर देवता र आफ्नो आत्माको मायिक भेद समाप्त गरी ब्रह्मस्वरूप हुने प्रयास गर्दछ । यसपछि ब्रह्ममन्त्रको सन्ध्या विधि सम्पन्न गरिन्छ । यसबाट यसै संसारमा ब्रह्मसम्पत्ति प्राप्त गर्न सम्भव हुन्छ । प्रातःकाल, मध्यान्ह र सायंकालमा उचित पवित्र स्थानमा पवित्र आसनमा बसेर साधकले परब्रह्मको ध्यान गर्दछ । यसमा 'परमेश्वराय विद्महे परतत्वाय धीमहि तन्नो ब्रह्म प्रचोदयात् ।' यस गायत्रीको जप गरिन्छ । यो गायत्री चतुर्वर्ग धर्म अर्थ काम र मोक्ष यी चारै पुरुषार्थ प्रदान

गर्ने ब्रह्मगायत्री हो । यसैमन्त्रले साधकले बिहानदेखि बेलुकीसम्म कर्म गर्दछ । त्यसको साधनसमेत गर्ने गर्दछ । त्यसपछि तत्सत् यो सत्य हो । त्रिकाल भूत, वर्तमान र भविष्यत् अवाधित छ भनेर मनन गर्दै सम्पूर्ण कर्म ब्रह्ममै समर्पित गर्दछ । यस मन्त्रको ऋषि सदाशिव, छन्द अनुष्टुप, देवता सर्वान्तर्यामी, निर्गुण ब्रह्म मानेर चतुवर्ग फल प्राप्तिका लागि विनियोग गरिन्छ । अङ्गन्यास र करन्या पनि 'ॐ सत् चित् एकं ब्रह्मसफलम्' यस मन्त्रले गरिन्छ तर उक्त मन्त्रमा सन्निविष्ट पदका पछाडि क्रमैले नमः, स्वाहा, वषट्, हुम्, वौषट् र फट् लगाएको हुनुपर्दछ भन्ने बताइएको छ । प्राणायाम पनि मूल मन्त्र अथवा प्रणवले गर्ने विधान छ । यसमा पूरक १८, कुम्भक ६४ र रेचक ३२ सङ्ख्यामा हुनुपर्दछ भन्ने पनि विधि रहेको छ । त्यसपछि ध्यान हुन्छ । आफ्नो इष्टदेवताको परब्रह्मपरमात्माको । आफ्नो हृदयकमलका बीचमा निर्विशेष, निरीह, जसलाई हरिहरलेमात्र जान्न सक्तछन्, योगीहरूले मात्र आफ्नो ध्यानमा ल्याउन सक्तछन्, जसले जन्म मरणको डरलाई नष्ट गर्दछ । त्यस्ता सत् चित् स्वरूप, समस्त भुवनका बीजस्वरूप ब्रह्म चैतन्यको ध्यान हुन्छ ।

यस्ता ब्रह्मको ध्यान गरेर तिनको मानसिक उपचारहरूले पूजन गरिन्छ । अत्यन्त भक्तिसाथ ब्रह्मसायुज्यका लागि गरिने यो सपर्या हो, पूजा हो । ब्रह्मको पूजा गर्दा पृथ्वीतत्वको चन्दन, आकाश तत्वको पुष्प वायुतत्वको धूप, तेजस्तत्वको दीप, जलतत्वको नैवेद्य परमात्मालाई समर्पण गरिन्छ । अनि गरिन्छ- जप महामन्त्रको जप र अनि यसको ब्रह्ममा समर्पण हुन्छ । यो अन्तर्याग हो । अन्त:पूजा जसको अर्को नाम सन्ध्या पनि हो । सन्ध्या शब्दको अर्थ ध्यान हो । विधिपूर्वक अत्यन्त भक्तिसाथ गरिने उत्कृष्ट प्रकारको ध्यान ।

यो अन्त:पूजा सकिएपछि (सन्ध्या सकिएपछि) अनि हुन्छ बहिः पूजा- बाहिरी विभिन्न दृश्य उपचारहरूको प्रयोग गरेर हुने पूजा । गन्ध, पुष्प आदि उपचारहरू जे उपलब्ध हुन्छ, उपस्थीत हुन्छ, वस्त्र, अलङकार, नैवेद्यहरू, पेय पदार्थहरू, जो पाइन्छन् ती सबलाई मूलमन्त्रले संशोधन गरेर सनातन ब्रह्मलाई आँखा चिम्लेर ध्यान गर्दै समर्पण गरिन्छ । यसका लागि मन्त्र हो -

**''ब्रह्मार्पणं ब्रह्महविर्ब्रह्माग्नौ ब्रह्मणा हुतम् ।**

**ब्रह्मैव तेन गन्तव्य ब्रह्मकर्म समाधिना ॥''**

यस मन्त्रले ब्रह्मलाई सम्पूर्ण उपचारहरू भक्तिपूर्वक समर्पण गरिसकेपछि मूलमन्त्रको यथाशक्ति जप गरिन्छ । यस जपलाई पनि ब्रह्ममा नै समर्पित गरिन्छ । त्यसपछि स्तोत्र, कवच आदिको पाठ गर्ने गरिन्छ । ब्रह्मको स्तोत्र बताइएको छ तन्त्रमा यसको पाठ गर्नाले ब्रह्म-सायुज्यको प्राप्ति हुन्छ भन्ने फलश्रुति छ-

**नमस्ते सतेसर्वलोकाश्रयाय नमस्ते चिते विश्वरूपात्मकाय ।**

**नमोऽद्वैततत्वाय मुक्तिप्रदाय नमोब्रह्मणे व्यापिने निर्गुणाय ।**

हे परब्रह्म परमात्मा हजुर सत्स्वरूप हुनुहुन्छ । समस्त लोकहरू हजुरमा आश्रित छन् । हजुर चित्-ज्ञान स्वरूप हुनुहुन्छ । यो समस्त विश्व हजुरकै विग्रह हो । हजुर अद्वैत तत्व हुनुहुन्छ । हजुरदेखि बाहेक कुनै तत्व नै विद्यमान छैन । हजुर मुक्तिदाता हुनुहुन्छ, व्यापक हुनुहुन्छ । निर्गुण गुणातीत हुनुहुन्छ । यस्ता ब्रह्म हजुरलाई नमस्कार छ । यस्तै भाव बोकेका पदहरूको लालित्यले भरिएको स्तोत्र छ परब्रह्म परमात्माको । त्यसको भक्तिभावले पाठ गरिन्छ । यो पञ्चरत्न स्तोत्र हो सच्चिदानन्द ब्रह्मको । यसको पाठ अत्यन्त संयत भएर भक्तिपूर्वक गर्ने साधकले ब्रह्म सायुज्य प्राप्त गर्दछ । प्रदोषकालमा, विशेष गरेर सोमबारका दिन आफू पनि सुन्ने, अरुलाई सुनाउने, ब्रह्मनिष्ठ बन्धुबान्धवसहित पाठ गर्ने व्यक्तिलाई मोक्ष प्राप्त हुन्छ ।

**प्रा. विद्यानाथ उपाध्याय**

**स्रोतः जनक**

सन् १९३३ अप्रील २१ तारीखका दिनमा भारतको राजस्थान प्रान्तस्थित जोधपुर जिल्लाको खरंटिया गाउँमा सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीको अवतरण भएको थियो । सानैदेखि विलक्षण स्वभाव र असाधारण प्रतिभासम्पन्न सद्गुरुदेवका विविध क्रियाकलापहरूले उहाँको दिव्यताको परिचय दिइरहन्थे । सम्पूर्ण आध्यात्मिक विधाहरूप्रति उहाँको सानैदेखि अत्यधिक झुकाव थियो र यी सबै विधाहरूलाई समाजमा पुनः प्रतिष्ठित गर्दै सर्वसाधारणका हातमा तिनलाई थमाउने उहाँको चाहना थियो ।

तर यो कुरा त्यसबेला अति नै कठिन थियो । मन्त्र, तन्त्रलगायत सम्पूर्ण आध्यात्मिक विधाहरूका वास्तविक ज्ञाता हिमालय, जङ्गल, गुफा, कन्दराहरूमा तपस्यारत थिए । मन्त्र, तन्त्रका अल्पज्ञहरूको समाजमा बिगबिगी थियो र उनीहरूको गलत रवैया र शोषणले गर्दा सर्वसाधारणको लागि यो एउटा भयको विषय बनेको थियो, यसप्रति अनेकौं गलत मान्यताहरू कायम भएका थिए । त्यस समय उहाँले आफ्नो व्यक्तिगत जीवन, घर-परिवार, पत्नी आदिको कुनै पर्वाह नगरी जङ्गल र हिमालयतर्फको यात्रा अङ्गीकार गर्नुभयो– जनकल्याणका लागि विविध आध्यात्मिक विधाहरूको ज्ञान प्राप्त गर्न ।

उहाँको त्यो कदम अत्यन्तै जोखिमपूर्ण थियो । घामपानी, हुरीबतास, बाढीपहिरो, अनेकौं हिंस्रक जनावरहरूबीच रहेर, पलपल मृत्युभयको सामना गर्दै हिमालय र जङ्गलको कुना-कुना चाहार्दै मन्त्र, तन्त्र र अन्य ज्ञानका वास्तविक ज्ञाताहरूलाई भेट्नु, उनीहरूलाई रिझाएर उनीहरूसँग रहेका गूढ ज्ञान हासिल गर्नु सामान्य कुरा थिएन । अत्यन्त कष्टदायक स्थिति र अन्तविहीन चुनौतीहरूको सामना गर्दै उहाँले आध्यात्मिक विधाहरूको खोज, अनुसन्धान गरी सत्यतथ्य हासिल गर्नुभयो, तिनका हराइसकेका, टुटिसकेका कडीहरूलाई पुनः जोड्नुभयो र हाम्रा पूर्वज ऋषिमुनिहरूद्वारा जनकल्याणका लागि प्रतिपादित यी सम्पूर्ण विधाहरूलाई समाजमा छर्नको लागि उहाँ पुनः समाजमा फर्कनुभयो ।

उहाँले समाजमा आफ्नो कार्य शुरु गर्नुभयो र उहाँको त्यो यात्रा पलपल खतरा, चुनौती र सङ्कट आत्मसात् गरेको जङ्गल-यात्राभन्दा पनि बढी कष्टप्रद बन्यो । मन्त्र, तन्त्रलगायत सम्पूर्ण आध्यात्मिक विधाहरूको वास्तविक ज्ञान जब उहाँले समाजमा उजागर गर्न थाल्नुभयो सम्पूर्ण समाज उहाँको विरोधमा उत्रियो । मन्त्र, तन्त्रप्रति भयको भावना राख्ने सर्वसाधारणले उहाँको विरोध गरे । मन्त्र, पूजापाठ आदिको अल्पज्ञानबाट पनि पंडित, पुरोहित बन्दै यिनलाई आफ्नो कमाउने भाँडो बनाइरहेका व्यक्तिहरूले आफ्नो वास्तविकता खुल्ने डरले उहाँको विरोध गरे, मन्त्र, तन्त्रको गलत प्रयोग गरेर सर्वसाधारणको शोषण गरिरहेका तथाकथित तान्त्रिक, मन्त्रिकहरूले आफ्नो साम्राज्य खोसिने डरले उहाँको विरोध गरे ।

उहाँमाथि चारैतर्फबाट विरोध, बाधा, लान्छना, आरोप आदि प्रहारहरू वर्षिरहे । अत्यन्त प्रतिकूल परिस्थितिबीच उहाँले आफ्नो कार्य अघि बढाउनुभयो, परिणामतः सम्पूर्ण आध्यात्मिक विधाहरू शास्त्रको क्लिष्टताबाट बाहिर निस्केर सरल, सहज र सटीकरूपमा समाजमा उजागर भए, मन्त्र, तन्त्र आदि विषयहरू पहिलोपल्ट युगसापेक्ष वैज्ञानिक विश्लेषणका साथ समाजमा प्रयोगात्मकरूपमा प्रतिष्ठित भए ।

समाजले प्रत्येक पल उहाँलाई आरोप र षडयन्त्र दियो र उहाँले आफ्नो जीवनको प्रत्येक पल त्यही समाजको हितको लागि व्यतीत गर्नुभयो । समाजको हित र चिन्तनको आहुतिमा उहाँको व्यक्तिगत जीवन सदा नै जलिरह्यो ।

आज हामी देख्छौँ– ज्योतिष, हस्तरेखा, आर्युवेद आदि विषयहरूमा घर-घरमा अध्ययन भइरहेछ । मन्त्र, तन्त्रप्रति जनचासो बढेको छ । आज बजारमा मन्त्र, तन्त्रसम्बन्धी नेपाल र भारतका सयौँ पत्र-पत्रिकाहरू देखिन्छन् । यी सबै केवल अनि केवल परमपूज्य सद्गुरुदेवको अतुलनीय त्याग र संघर्षको कारणबाट भइरहेछ भलै युगले यो कुरालाई स्वीकारोस् वा नस्वीकारोस् । उहाँको अथक परिश्रमबाट नै आज सम्पूर्ण विश्वमा आध्यात्मिक विधाहरू लहराउन थालेका छन् र विश्व युग परिर्वतनको संघारमा छ । आफ्नो अवतरणकालभरि परमपूज्य सद्गुरुदेवले गर्नुभएका सम्पूर्ण गतिविधिहरूले आध्यात्मिक युगको पृष्ठभूमि तयार पारेका छन् र जब युग परिवर्तनको घडी नजिकियो, सद्गुरुदेवले देहत्याग गर्नुभयो, महाप्रयाण लिनुभयो ।

परमपूज्य सद्गुरुदेव सम्पूर्णरूपमा शिष्यवत्सल सद्गुरुदेव हुनुहुन्छ । आफ्ना शिष्यको प्रत्येक धड्कनमा धड्किने सद्गुरुदेवको शिष्यप्रेम वर्णनातीत छ । आफ्नो अवतरणकालमा उहाँले विश्वभरिका आफ्ना शिष्यहरूलाई विभिन्न माध्यमबाट आफूसँग जोड्नुभयो र शिष्य निर्माण प्रक्रियालाई सर्वाधिक जोड दिनुभयो । उहाँले हरेक दृष्टिबाट आफ्ना शिष्यहरूलाई पूर्ण र अद्वितीय बनाई उनीहरूकै माध्यमबाट यस युगलाई शीतलता दिन चाहनुभएको छ । उहाँले भन्नुभएको छ– 'मेरा शिष्यहरूले नै आध्यात्मिक युगको सूत्रपात गर्नेछन्' । त्यस्तै उहाँले आफ्ना शिष्यहरूलाई आदेश दिनुभएको छ– 'जब दुनियाँमा अँध्यारोको साम्राज्य छाउनेछ, जब आसुरी प्रवृतिहरूको बिग्बिगी बढ्नेछ, तिमीहरू प्रकाश बनेर धर्तीभरि फैलनू" ।

जीवन धेरैले लिन्छन्, जिउँछन् र मर्छन् पनि । जीवित हुनुको पनि कुनै अर्थ छैन, कुनै आनन्द, मस्ती छैन, कुनै गर्व छैन जबसम्म जीवनको वास्तविक अर्थ बुझ्ने क्षमता हुँदैन, जीवनमा पुरुषार्थ गर्ने कला हुँदैन । सामान्यरूपमा जन्मनु अनि मर्नुलाई हामी जीवन भनेर व्याख्या गर्ने गर्छौं, ठूलठूला परिभाषा दिने गर्दछौँ र यस्तो जीवनमा हामी गर्व गरिरहेका हुन्छौँ । सामान्य जन्मनु र मर्नुलाई जीवन भनेर जीवनको परिभाषालाई संकुचित बनाएका छौँ । परमपूज्य सद्गुरुदेवको अवतरणसँग धरै व्यक्तिहरूले जीवनको परिभाषालाई बुझ्ने मौका पाए, जीवनको लक्ष्य, उद्देश्यलाई आत्मसात् गर्ने सौभाग्य पाए, जीवनको उच्चता एवं महानताको बारेमा बुझ्ने सौभाग्य पाए, जीवनका वास्तविक परिभाषाहरू जान्ने मौका पाए । परमपूज्य सद्गुरुदेवको अवतरणकाल आफैमा गरिमामय रह्यो, अद्वितीय क्षणहरू समेटिएको आफैमा दुर्लभतम समय रह्यो, कालखण्डको इतिहासमा एक गौरवमय अद्वितीय युगपुरुषको आगमनको काल रह्यो । उहाँको अवतरणबाट सबैका लागि गुरुतत्त्वसँग जोडिने स्वर्णिम अवसर प्राप्त भयो ।

सामान्य व्यक्तिहरू जन्मनु र मर्नुको कुनै अर्थ छैन, कुनै गणना

छैन तर त्यस्ता महान् व्यक्तित्वहरूको शरीर छाड्नुको पनि आफ्नै महत्त्व छ र त्यो संसारकै लागि आफैमा एउटा ठूलो घटना बन्ने गर्दछ । सन् १९९८ जुलाई ३ तारीखमा परमपूज्य सद्गुरुदेवको महाप्रयाण संसारलाई नै थर्काउने घटना बन्न पुग्यो, सारा मानव समुदाय एवं दैवीसत्तालाई समेत हलचल गराउने, स्तब्ध बनाउने ठूलो ऐतिहासिक घटना बन्न पुग्यो । एक अद्वितीय युगपुरुष जो आफैमा सम्पूर्ण सिद्धि, शक्ति, क्षमताका पूँजीभूतस्वरूप हुनुहुन्थ्यो, यस्ता अवर्णनीय, अनिर्वचनीय, महायोगीको महाप्रयाण पृथ्वीमाताको लागि समेत दु:खद घटना थियो । आफ्नो सत्य धर्म छोडेर असत्य, कुकर्ममा लागिरहेका आजका मानिसहरूको भार सहेर बस्नुभएकी करुणाकी खानी ममतामयी धर्तीमाताको वेदनालाई कम गरी पृथ्वीतटलाई नै स्वर्ग बनाइदिने, सिद्धाश्रम बनाइदिन सक्ने युगपुरुषको भौतिकरूपमा उपस्थिति आफैमा कति महत्त्वपूर्ण थियो, कति अतुलनीय थियो भन्ने कुरा क्षमतावान् व्यक्तिहरूबाट लुकेको छैन, दैवी शक्तिहरूबाट छिपेको छैन । यो त प्रकृतिको गर्भभित्र गर्वशालीरूपमा दैदीप्यमान् रूपमा समाहित छ ।

यस्ता महान् व्यक्तित्वले महाप्रयाण लिनुभएको पनि दश वर्ष बित्न लागिसकेको छ । उहाँले शिष्यहरूका काँधमा छोडेर जानुभएको जिम्मेवारीलाई हामीले कति हदसम्म पूरा गर्न सक्षम भयौँ ? यो कुरा आज प्रत्येक शिष्यले सोच्ने बेला आएको छ । सानातिना कुराहरूमा अल्झिएर महान् योजनामा अगाडि बढ्ने हाम्रो संकल्प एवं कार्यमा बाधा त उत्पन्न भएको छैन ? सबैले विचार गर्ने बेला आएको छ । आध्यात्मिकरूपबाट अगाडि बढिरहेका सम्पूर्ण मानवहरूलाई हौसला, प्रेरणा दिँदै आगामी युग अध्यात्ममय बनाउन कम्मर कस्ने बेला हो अहिलेको अवस्था ।

अन्त्यमा सम्पूर्ण शिष्यहरूलाई, सम्पूर्ण मानवलाई परमपूज्य सद्गुरुदेवले सद्बुद्धि, सद्प्रेरणाका साथ अनुकम्पा, कृपा एवं आशीर्वाद प्रदान गर्नुहोस् भनी प्रार्थना गर्दछौँ ।

जय गुरुदेव !

# गुरु पूर्णिमा

सयौँ वर्ष अघिदेखि आषाढ शुक्ल पूर्णिमालाई गुरु पूर्णिमाको रूपमा मनाउने गरिएको छ। मानव जीवनमा यही मात्र एउटा यस्तो दिन हो जसले हामीलाई जीवनको बाटो देखाउने, हृदयस्थित अन्धकार हटाउन प्रयत्न गर्ने र हामीलाई पूर्णतासम्म पुऱ्याउने गुरुमा समर्पित हुनुपर्ने कुराको बोध गराउँछ। यस्तो दिव्य दिनमा उहाँको चरणमा विसर्जित हुन पाउनु परम सौभाग्य हो। किनभने शीतल छायाँरूपी गुरुचरणमा बस्ने र आफूलाई गुरु ज्ञानको सागरमा डुबाउने दिन नै गुरु पूर्णिमा हो।

आजका मानिस सबै कुरा भएर पनि तनावग्रस्त र मानसिकरूपमा पीडित छ। जीवनमा ऊ लक्ष्यहीन भएर दौडिरहन्छ र यस दौडाइमा उसले पत्नी, छोराछोरी, घर, जग्गा, धन, सम्पत्ति, वैभव आदि सम्पूर्ण कुरा प्राप्त गर्दछ तैपनि उसलाई मानसिक शान्ति भने हुँदैन, उसले आनन्दसँग बाँच्न पाइरहेको हुँदैन। जीवनमा केही अधुरोपन, खालीपनको महसुस भई नै रहन्छ र जबसम्म यो खालीपन भरिँदैन तबसम्म मानसिक शान्ति पनि सम्भव हुँदैन जुन मानसिक शान्ति प्राप्त गर्न आजको सारा समाज तड्पिरहेको छ।

...र गुरु पूर्णिमा यसै उद्देश्य प्राप्तिका लागि हो किनकि पति र पत्नीबीच एकप्रकारको सम्बन्ध हुन्छ, मनुष्य र धनबीच छुट्टै किसिमको सम्बन्ध हुन्छ तर पवित्र आध्यात्मिक सम्बन्ध केवल गुरु र शिष्यबीच मात्र सम्भव हुन्छ। गुरुसँगको यही सम्बन्ध नै पछि गएर मानसिक शान्ति दिनमा समर्थ हुन्छ।

गुरु पूर्णिमाको दिनमा नै जीवनमा उच्चतर स्थिति प्राप्त गर्न सकिन्छ। जब हामी आफूले आफैलाई चिन्न सक्छौँ तब आफ्ना विशेषताहरूका साथसाथै जीवनका न्यूनताहरू पनि थाहा पाउन सक्छौँ। हाम्रो जीवनमा किन खल्लोपन, खालीपन, छटपटी छ ? यो छटपटी, खालीपन र मानसिक अशान्तिलाई कसरी हटाउन सकिन्छ भन्ने कुरालाई पनि बुझ्ने चेष्टा गर्न सक्छौँ।

गुरु पूर्णिमा गुरुको दिन नभई शिष्यहरू परस्पर मिल्ने दिन हो। गुरु आफैमा पूर्ण हुनुहुन्छ। पूर्ण नभई गुरु बन्न पनि सकिँदैन। त्यसैले गुरुलाई पूर्ण हुनुपर्ने कुनै आवश्यकता छैन। आवश्यकता छ भने केवल शिष्यलाई छ। शिष्यका दुई अर्थहरू छन्; एउटा हो– नजिक जानु, सामीप्य प्राप्त गर्नु अर्थात् आफूलाई गुरुमा समाहित गरिदिनु र अर्को हो- 'शक्ति'। यो शक्ति आत्मशक्ति पनि हुन सक्छ, आध्यात्मिक शक्ति पनि हुन सक्छ जुन हामीभित्र सुषुप्त अवस्थामा रहेको हुन्छ। त्यसैले यसलाई चिन्नु छ, जगाउनु छ, उपयोग गर्नु छ र ऊर्ध्वमुखी गराएर दुवै आँखीभौँको बीचमा स्थापित गर्नु छ। गुरु पूर्णिमाकै दिनमा दुवै आँखीभौँका बीचमा टीका लगाएर गुरुले यो कुरा बताउनुहुन्छ कि यही नै त्यो स्थान हो जहाँ तिमीले आफ्नो शक्ति केन्द्रित गर्नु छ जसले गर्दा पछि गएर उक्त शक्ति सम्पूर्ण विश्वमा छाउन सकोस्, तिम्रो तेस्रो नेत्र जागृत हुन सकोस् र जीवनको अधुरोपनलाई पूर्णता दिन सकोस्।

गुरु पूर्णिमा आफूले आफैलाई चिन्ने दिन हो। यसभन्दा पनि अगाडि बढेर तपाईंभित्र सुषुप्त अवस्थामा रहेको जुन शक्ति छ, जसलाई कसैले दिव्य शक्ति, कसैले कुण्डलिनी शक्ति र कसैले आध्यात्मिक शक्ति भन्ने गर्दछन्, त्यसलाई चिन्नुपर्ने आवश्यकता छ र गुरु नै यो शक्ति जागृत गर्नमा सहायक हुनुहुन्छ। जो अन्धकारबाट प्रकाशतर्फ लान सक्षम, साधना, संयमता, तपस्या र आत्मविश्वासका आधार हुनुहुन्छ, यदि यस्ता गुरुमाथि विश्वास गरेर उहाँको मार्गमा हिँड्नुहुन्छ भने अवश्य नै तपाईं त्यस गन्तव्यमा पुग्नुहुनेछ जुन तपाईंको जीवनको अभीष्ट हो, लक्ष्य हो र यही अभीष्ट प्राप्ति गर्ने दिन नै गुरु पूर्णिमा हो। एकातिर अशान्ति, भय, दुःख र चिन्तारूपी पहाडले तपाईंको मार्ग अवरुद्ध गरिरहेछन् भने अर्कोतिर सत्य, आनन्द र पूर्णतारूपी सागर तपाईंको प्रतीक्षामा लहराइरहेछ। अब यिनै वासनात्मक मायाजाल, अशान्ति र भयरूपमा अल्झिरहने हो वा शान्ति, करुणा र प्रेमरूपी समुद्रमा हामफाल्ने हो, यो त तपाईंमा नै निर्भर छ। गुरु पूर्णिमा त तपाईं आफ्नो घरमा पनि मनाउन सक्नुहुन्छ। दर्शन प्राप्त गर्नु नै पूर्णिमाको अर्थ हो र गुरुको दर्शन घरमै बसेर, ध्यान गरेर पनि प्राप्त गर्न सक्नुहुन्छ। तर तपाईंलाई त शिष्य पूर्णिमामा भाग लिनु छ जहाँ तपाईंजस्ता सयौँ-हजारौँ गुरुदाइ, गुरुभाइ तथा दिदी-बहिनीहरू उपस्थित हुन्छन्। सबैजना एउटा विशेष मार्गमा गतिशील हुनका लागि प्रस्तुत हुन्छन्। उनीहरूको बीचमा रहनु र आफूलाई गुरुसामु विसर्जित गर्नुमा नै तपाईंको कल्याण छ।

गुरुको स्वरूप तीन प्रकारको हुन्छ- स्थूल, सूक्ष्म र आत्मदर्शी। स्थूल स्वरूपमा उहाँ हामीजस्तै भौतिक शरीर धारण गरेर खाने, बस्ने, उठ्नेजस्ता लौकिक व्यवहार गर्नुहुन्छ तर पनि उहाँको विचारमा अधिक संयम, त्याग, विवेक र तेजस्विता भरिएको हुन्छ। सूक्ष्मरूपमा गुरुले आफ्नो शिष्यमा बौद्धिक चेतना प्रवाहित गर्नुहुन्छ, उसको मस्तिष्कमा रहेका विभिन्न शंकाहरू समाधान गर्नुहुन्छ र उसको मानसपटलमा आफ्ना विचारलाई प्रवाहित गरिदिनु हुन्छ र उक्त अन्जान शिष्य जब त्यस विचार प्रवाहलाई स्वीकार गर्दै अगाडि बढ्छ तब उसले आफूभित्रै गुरु बस्नुभएको देख्दछ। यही नै गुरुको सूक्ष्म रूप हो। गुरुको तेस्रो रूप हो- आत्मदर्शी। कुनै शिष्य पूर्वजन्ममा पनि उही गुरुको शिष्य भएर पनि योगभ्रष्ट भएका कारण गलत पथमा अग्रसर हुनसक्छ। अब यस जन्ममा आफ्नो सम्पर्कमा आउनेबित्तिकै गुरुले उसलाई चिनेर आफ्नो चेतनाले उसको हृदय र आत्मालाई समातेर र आफूतर्फ खिच्नुहुन्छ र शिष्य चुम्बकले फलाम तानेझैँ तानिन पुग्छ। यही नै गुरुको आत्मदर्शी स्वरूप हो र यो खिचिनु, आकर्षित हुनु, गुरुमा एकाकार हुनु पनि यसै शिष्य पूर्णिमा पर्वमा सम्भव हुन्छ।

गुरु सामान्यरूपमा नै शिष्यको सम्पर्कमा आउनुहुन्छ तर त्यसै एक झट्काले शिष्य गुरुतिर खिचिन पुग्छ, गुरुमा नै एकाकार हुन लालायित हुन्छ र त्यस समयमा उसले माता-पिता, बन्धु-बान्धव, लोक-व्यवहार र सामाजिक मर्यादाहरूलाई कुनै वास्ता गर्दैन किनकि गुरुलाई देख्नेबित्तिकै उसका पूर्व जीवनका तरङ्गहरू विद्युत्‌रूपमा तीव्रताका साथ शरीरमा प्रवाहित हुन थाल्दछन्, सारा शरीर नै विद्युत्‌मय भएर निमग्न हुन पुग्छ र गुरुमा एकाकार हुन पुग्छ।

गुरु सान्निध्यता प्राप्त गर्न, उहाँमै समाहित हुन तथा ब्रह्मानन्दको परमानुभूति गर्न यसै पावन दिवसदेखि दृढ सङ्कल्पित होऔँ र गुरु चरण प्राप्तिको मार्गमा पहिलो पाइला अगाडि सारौँ।

जय गुरुदेव !

## कविता

# गोरख निखिल चरणमा

गुरुदेव, देव भन्दै तिमीलाई जप्न पाऊँ
गोरख निखिल चरणमा आफ्नो शिर झुकाऊँ ।

कयौं जन्म बिताएँ तिमीलाई बिर्सी मैले
कुन पूण्यले यो पाएँ तिम्रो शरण अहिले
बुझ्नै सकिन तिम्रो लीला कता म जाउँ ?
गोरख निखिल चरणमा आफ्नो शिर झुकाऊँ ।

तिमीबाट टाढा ठान्थैं पहिले म आफूलाई
दर्शन दियौ सुटुक्क एउटा साधनामा आई
नजिक छौ भन्न थालें तर पाइएन भेट
गोरख निखिल चरणमा आफ्नो शिर झुकाऊँ ।

गोरक्ष रक्षा गर्ने अध्यात्म धर्म हाम्रो
निखिल ब्रह्माण्डका नायक तिमी राम्रो
परमात्म आत्म हाम्रा गुणगान तिम्रै गाऊँ
गोरख निखिल चरणमा आफ्नो शिर झुकाऊँ ।

श्रद्धा पुरित दुई अश्रु गुरुद्वयलाई चढाई
युगल चरणमा तिम्रो जीवनको भार बिसाई
गुरुदेव, गुरुदेव भन्दै संसार छोड्न पाऊँ ।
गोरख निखिल चरणमा आफ्नो शिर झुकाऊँ ।

–भुवनराज पाण्डेय
बसुन्धरा, काठमाडौं ।

## गुनासो छ भने लेख्नुहोस्

- के तपाईंको पत्रिकासँग सम्बन्धित कुनै गुनासो छ ?
- के तपाईंलाई पत्रिका नियमित प्राप्त भइरहेको छैन ?
- के तपाईंको सदस्यता अवधिमा त्रुटि देखिन्छ ?
- के तपाईंलाई पत्रिका सदस्य विस्तार गरेबापतको उपहार प्राप्त भएको छैन ?
- के तपाईं पत्रिका आइपुग्ने आफ्नो ठेगाना परिवर्तन गर्न चाहनुहुन्छ ?
- के तपाईंका यसका अतिरिक्त अरू पनि गुनासा तथा समस्याहरू छन् ?

आफ्नो गुनासोलाई पत्र, इमेल, फोनबाट वा भेटेर पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभागमा तुरुन्त जानकारी गराउनुहोस् । सम्भव भएसम्म समस्याको समाधान तुरुन्त हुनेछ ।

साथै, गोरक्ष निखिल वाणीका पुराना अङ्कहरू चाहिएमा सम्पर्क राख्नुहोला ।

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग**, फोन : ०१६२२५१७७ वा

## आषाढ महिनाका चाडपर्व

| | |
|---|---|
| आषाढ १ गते | प्रदोष व्रत |
| आषाढ २ गते | **श्री शिव गोरक्ष हवन** |
| आषाढ ३ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
| आषाढ ४ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| आषाढ ५ गते | **तान्त्रोक्त वगलामुखी हवन** |
| आषाढ ७ गते | **दिव्य गुरु महोत्सव** |
| आषाढ १२ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| आषाढ १५ गते | योगिनी एकादशी व्रत |
| आषाढ १६ गते | प्रदोष व्रत |
| आषाढ १९ गते | **महाप्रयाण दिवस** |
| आषाढ २६ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| आषाढ ३० गते | हरिशयनी एकादशी, तुलसी रोप्ने दिन |
| आषाढ ३१ गते | प्रदोष व्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**

शिष्यको अर्थ हो मस्ती, शिष्यको अर्थ हो आनन्द, शिष्यको अर्थ हो उचाइ, शिष्यको अर्थ हो श्रेष्ठता र शिष्यको अर्थ हो पूर्ण समर्पण । तर गुरुको अर्थ हो तनाव झेल्नु किनकि शिष्यलाई कहाँसम्म, कसरी कुन उचाइसम्म पुर्‍याउने हो त्यो सम्पूर्ण तनाव गुरुले नै झेल्नु पर्दछ ।

*– परमपूज्य सद्‌गुरुदेव*

# दश महाविद्या

विश्व ब्रह्माण्डमा असंख्य विद्याहरू छन् । यी असंख्य विद्याहरूमध्ये हजारौं लाखौं विद्याहरूलाई दश महाविद्याअन्तर्गत राखेर व्याख्या गरेको पाइन्छ । एउटै महाविद्याभित्र हजारौं लाखौं विद्याहरू अट्न सक्छन् । यसरी हेर्दा दश महाविद्याभित्र असंख्य विद्याहरू समेटिने गर्दछन् । विद्याहरू अध्ययन गर्न सजिलो होस्, प्राप्ति गर्न सजिलो होस्, विद्याहरूको एकरूपतालाई ख्याल राखेर महाविद्याहरूलाई दश भागमा विभाजन गरेको पाइन्छ । हुन त खोज्दै गयो भने महाविद्याका अरु श्रृंखलाहरू पनि प्राप्त हुन सक्छन् । कति प्रकटमा होलान् कति अप्रकटमा । तैपनि चलनचल्तीमा भएका यी दश महाविद्याहरूको पनि ब्रह्माण्डीय विद्याअन्तर्गत आफ्नै गरिमामय स्थान रहेको पाइन्छ ।

यी महाविद्याहरूमा निम्न छन्: १. काली २. तारा ३. षोडशी ४. भुवनेश्वरी ५. धूमावती ६. छिन्नमस्ता ७. त्रिपुरभैरवी ८. बगला ९. मातंगी १०.कमला ।

यी महाविद्यालाई दुई कुलमा विभाजन गर्न सकिन्छ :

१. काली कुल २. श्री कुल

काली कुलमा दश महाविद्याहरूमध्ये काली, तारा, भुवनेश्वरी, छिन्नमस्ता चार महाविद्या समावेश छन् । यसका अतिरिक्त रक्तकाली, महिषमर्दिनी, त्रिपुरा, दुर्गा, प्रत्यंगिरा यी पाँच विद्याहरू पनि काली कुलमा नै समावेश छन् ।

श्री कुलमा त्रिपुरसुन्दरी (षोडशी), त्रिपुरभैरवी, बगला, कमला, धूमावती, मातंगी यी ६ महाविद्याहरूलाई समावेश गरिएको छ । यसका अतिरिक्त बाला, स्वप्नावती, मधुमती गरी अन्य तीन विद्याहरू पनि यसमा समावेश छन् ।

यसप्रकार यी अठार सिद्ध विद्याहरू हुन् । यसका अतिरिक्त महाभैरव, चण्डेश्वर, शूलपाणि, बटुक भैरव, नृसिंह, राम, कृष्ण, गोपाल, मार्तण्ड भैरव, बेताल, गणपति, उच्छिष्ट गणपति, श्मशान भैरवी, उन्मुखी, चंडिका, लक्ष्मी, महालक्ष्मी, सरस्वती आदि देवीदेवताहरूका साधना शीघ्र फलदायी देखिन्छन् ।

# सवालाख रोट

सिद्धाश्रम शक्ति केन्द्रले गत ज्येष्ठ ७ देखि १७ गतेसम्म विभिन्न कार्यक्रमहरूका बीच रोट महोत्सव कार्यक्रम सम्पन्न गरेको छ। परमपूज्य एवं परमआराध्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पणार्थ आयोजित सो महोत्सव पाँचौं हो ।

ज्येष्ठ ७ गते बिहानैदेखि सम्पर्क कार्यालय गोरखामा सिद्धाश्रम शक्ति केन्द्रका अधिराज्यभरि छरिएर रहेका सम्पर्क कार्यालय, प्रस्तावित सम्पर्क कार्यालयलगायत आरती संचालन केन्द्रका अतिरिक्त विभिन्न ठाउँबाट महोत्सवमा सहभागी हुन आउनु भएका भक्तजनहरूको ठूलो समूह उपस्थित हुनुहुन्थ्यो । पंक्तिबद्ध साधक साधिकाहरूको अग्रपंक्तिमा झण्डा, त्यसपछि बाजा, १०८ घडा बोकेका कन्याहरूको समूह, त्यसपछि सद्‌गुरुदेवहरूको श्रीफोटो र पादुका सजिएको खट, सावरपन्थी तथा सावरमातृका सदस्यहरू, नाथयोगीहरू, बौद्ध धर्मावलम्बी लामाहरूको समूह, अन्य अतिथि, विद्याश्रमका भाइ-बहिनीहरू र शिक्षक शिक्षिकाहरूपछि सम्पर्क कार्यालयहरू र आरती संचालन केन्द्र र अन्तमा सम्पर्क कार्यालय गोरखाको टोली पंक्तिमा क्रमबद्ध थिए । आ-आफ्ना चिनारी दिने व्यानरसहितको सम्पर्क कार्यालय र आरती संचालन केन्द्रको समूहले विभिन्न नारायुक्त प्लेकार्ड, व्यानर बोक्नुभएको थियो भने पहेँला गुरु चादरमा सजिइनु भएका साधक साधिकाहरूका हातमा व्यानर र प्लेकार्ड अत्यन्तै शोभायमान थियो । बिहान ८:१५ मा स्तुति, प्रार्थना र जयकारपछि शुभारम्भ भएको शोभायात्रा पुरानो बाटो हुँदै गोरख गुफा पुगेको थियो ।

बाटामा शोभायात्राको स्वागतार्थ घर-घरमा कलश राखिएको थियो । बाटामा ठाउँ- ठाउँमा शोभायात्रामा सहभागीहरूलाई टिका, फूलले स्वागत गरिएको थियो। जयकारसँगै निस्किएको शोभायात्रा बिहान १०:३५ मा गोरख गुफा पुगेको थियो ।

गोरख गुफामा बिहान ११ बजे झण्डोत्तोलनको कार्यक्रम सम्पन्न भएको थियो। त्यसपछि समीको चौतारोमा भजन-कीर्तन र नृत्य सम्पन्न भयो भने श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा रोट अर्पण गरिएको थियो ।

यसरी शोभायात्राबाट शुरु भएको रोट अर्पण कार्यक्रमको पहिलो र अन्तिम दिनबाहेक ८ गतेबाट नियमितरूपमा बिहान ७–८ सम्म स्तवन, स्तुति, ८–९ मन्त्रजप, ९ बजे संस्थागत हवन, १० बजे प्रसाद (भोजन), १२–४ सम्म भजन-कीर्तन, दिउँसो २ बजे गुरु पूजन, साँझ ५ बजे नित्य आरती, ६ बजे रोट अर्पण भएको थियो ।

त्यस्तै महोत्सवमा केन्द्रका अतिरिक्त विभिन्न सम्पर्क कार्यालयहरूले लाख वत्ती बाल्ने अवसर पाउनु भएको थियो । महोत्सव अवधिभरि विभिन्न स्टलहरू पनि राखिएको थियो भने कार्यक्रममा रोटका लागि सहयोग काउन्टरहरू राखिनुका साथसाथै भवन निर्माणार्थ विभिन्न सम्पर्क कार्यालयहरूले पालैपालो सहयोग काउण्टर खोल्ने अवसर पाउनु भएको थियो । महोत्सवमा प्रत्येक दिन डेकोरेशनको जिम्मेवारी पालैपाले गरी आरती संचालन केन्द्र र सम्पर्क कार्यालयहरूले पाउनु भएको थियो ।

महोत्सवमा ज्येष्ठ ७ गते सावर संरचना शक्ति केन्द्रबाट प्रकाशित 'ध्यानामृत' ग्रन्थको गुरुचरणार्पण भयो । त्यस्तै ज्येष्ठ, १० गते आध्यात्मिक नेतृत्वकर्ताबाट विकसित भएर गुरुसेवा दलमा प्रवेश गर्न सफल साधिका सुषमा लामिछाने र साधक भोजराज जोशीलाई गुरुसेवा दलको हरियो पोशाक वितरण गरिएको थियो । यसभन्दा अगाडि ज्येष्ठ ८ गते दिव्य गुरु महोत्सवको पावन अवसर पारेर साधक सुन्दरराज आचार्यलाई गुरुसेवा दलको पोशाक पहिऱ्याइएको थियो ।

कार्यक्रमको अन्त्यमा रोट महोत्सवमा सक्रियरूपमा सहयोग पुऱ्याउनु हुने स्थानीय नाथयोगीलगायतहरूलाई पत्रम्-पुष्पम्का साथै उपहार प्रदान गरिएको थियो । महोत्सव कार्यक्रममा सहयोग पुऱ्याउने नेपाल आर्मी, सशस्त्र प्रहरीसँग सम्बन्धितहरूलाई धन्यवादका साथ उपहार प्रदान गरिएको थियो । उक्त अवसरमा गोरखा सम्पर्क कार्यालयका पत्रिका सदस्यता विस्तारमा सहभागी हुनेहरूलाई विशेष उपहार प्रदान गरिएको थियो ।

उक्त अवसरमा गोरखा दरवार क्षेत्रमा रहेको सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्रको भवन निर्माणार्थ पोखरा सम्पर्क कार्यालयबाट रु. १ लाख २५ हजार, प्रहरी नायव गीता उप्रेतीबाट रु. २५ हजार ५ सय २५, चन्द्रकुमारीबाट रु. २५ हजार १ सय ५१, बाबुराम श्रेष्ठबाट रु. ११ हजार १ सय ११, बद्रीबहादुर मास्केबाट रु. ५ हजार ५ सय ५५, भगत बाबु जोशीबाट रु. ५ हजार १ सय ५१, राम पूजन ठाकुरबाट रु. ५ हजार १ सय, तेजबहादुर रानाबाट रु. ५ हजार ५ सय, किशोर अकेलाबाट रु. ५ हजार, सानु अर्यालबाट रु. ३ हजार ५ रकम सहयोग प्राप्त भएको थियो । त्यस्तै रु. २५ हजार नाम प्रकाशित नगर्ने शर्तमा सहयोग प्राप्त भएको थियो ।

श्रीमान् भाइचन्द्र र श्रीमती वनु श्रेष्ठले १३ आना जग्गा भवन निर्माणार्थ उपलब्ध गराउनु भएको थियो ।

# महोत्सव-२०६५

त्यस्तै, महोत्सव अवधिभरि दिनदिनै विभिन्न स्थानबाट आउने कार्यकर्ताहरूको जानकारीका लागि र नयाँ कार्यक्रमहरूको बारेमा जानकारी दिन समीको चौतारोमा नियमित ब्रिफिङ हुने गरेको थियो । कार्यक्रम अवधिभर विभिन्न सम्पर्क कार्यालय, आरती सञ्चालन केन्द्रहरुको तर्फबाट नृत्य तथा भजन कीर्तन प्रस्तुत गरिएको थियो ।

महोत्सवको अन्तिम दिन अर्थात् ज्येष्ठ १७ गते बिहान साधिका बालिका बहिनीबाट विशेष भजन-कीर्तन कार्यक्रम सम्पन्न भयो । उक्त कार्यक्रम बिहान ७ बजे शुरु भएको थियो ।

कार्यक्रममा स्थानीय प्रमुख जिल्ला अधिकारीले सो रोट कार्यक्रम सम्पन्न गर्नमा सहयोग पुऱ्याउनु हुने सबै संघ, संस्थालगायत सम्पूर्णलाई धन्यवाद दिनुभयो ।

जय गुरुदेव !

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी तगोर्खा) स्वयंको नै हुनेछ ।

# श्री गोरख महापुराण

## (छयालीसौं भाग)

प्यारा मित्रहरू ! अघिल्लो दिनबाट नै वर्षानेबाट घिउ, दूध, मखनका घैँटाहरू मथुरा पुग्न लागे र महंगो मूल्यमा बिक्न लाग्यो । मथुराका जनताको समस्या समाधान भयो । श्रीकृष्णलाई थाहा भयो कि आफ्ना पिताको प्रधानता खोसेर वृषभानुलाई प्रधान बनाइएको छ । यसलाई सुनेर सत्याग्रहप्रेमीहरूको टोली वर्षाने पुगे । त्यहाँ पुगेर उनीहरूले नारा लगाउन शुरु गरे– 'कंश जाली राजा हो, मथुरामा घिउ, दूध पठाउनु उचित होइन ।' नाराबाजीलाई सुनेर वर्षानेका जनता घरबाट बाहिर निस्केर श्रीकृष्ण र उनका साथीहरूको कुरा बुझ्न लागे । तब राधाका पिताका मानिस र कंशका सिपाहीहरले आएर सत्याग्रहीहरूलाई लाठी वर्षाउन शुरु गरे । उनीहरूले सत्याग्रहीहरूको शिर फोरिदिए । धेरै सत्याग्रहीहरू रगतले

नुहाए । यो नै त्यो वर्षानिको कुख्यात होली हो जसलाई आज कसैले जान्नसम्म पनि पाएको छैन ।

प्यारा बन्धुहरू ! जब यो खबर वृषभानुनन्दिनी राधाले सुनिन्, उनी एकदम दौडदै यसो भन्दै आइन्– दुष्ट कंशले राम्रो चाल चल्यो, भाइहरूको टाउको भाइहरूबाटै फोरिदियो । उनले कन्हैयाको नजिक आएर भनिन्– कृष्ण, जे हुनु थियो त्यो भयो । अब तिमी निश्चिन्त होऊ । आजबाट घिउ, दूध, मथुरा जाने छैन । राधा आजबाट सत्याग्रहमा सामेल भएको छ । म नारीहरूसँग घर-घर गएर भन्ने छु कि घिउ, दूध बेच्नु अन्याय हो । तिमीहरू पुरुषमा प्रचार गर्नू । राधाले जुन वचन श्रीकृष्णलाई दिएकी थिइन् त्यसलाई उनले पूरा गरिन् र घर-घर प्रचार गरेर घिउ, दूध, बिक्री बन्द गराइदिइन् । ब्रजभूमिका सबै जनताले त्यसै दिनबाट 'रुक्मिनी-कृष्णको जय' गाउन छोडेर 'राधा-कृष्णको जय' भन्न थाले । यही असल प्रेम राधा-कृष्णको थियो जसको रूप आज निर्लज्जताको स्वरूप बनाइएको छ ।

प्यारा बन्धुहरू ! भगवान् श्रीकृष्णको सबैभन्दा ठूलो दुश्मन शिशुपाल थिए किनकि श्रीकृष्णले विश्वसुन्दरी रुक्मिणीलाई हरेर ल्याएका थिए । जब राजा युधिष्ठिरको यज्ञमा दुवै जम्मा भए तब श्रीकृष्णलाई सम्मान दिने विषयमा विरोध गरेर अनेक प्रकारका गालीहरू दियो । तर उसले पनि श्रीकृष्णलाई लम्पट, व्यभिचारी भनेन । यदि श्रीकृष्ण अति स्त्रीभोगी र कामी, व्यभिचारी भएको भए महाभारतमा आफ्नो खुबीले पाण्डवलाई उनी जिताउन र गीताजस्तो अनमोल ज्ञान, जसलाई पढेर आज विश्व आश्चर्यचकित छ, सुनाउन सक्दथे ? यो कार्य एक महायोगी र ब्रह्मचारी नै गर्न सक्छ । भगवान् श्रीकृष्णमा यी दुवै गुण थिए । यसकारण आज घर-घरमा पूजनीय हुनुहुन्छ । कृष्ण-सुदामा वा महाभारत ग्रन्थ पढेर पनि तपाईं सम्झन सक्नुहुन्छ कि श्रीकृष्ण कति महान् थिए ।

राधालगायत सबैले घर-घर गाउँ-गाउँ प्रचार गरेर ठाउँ-ठाउँ गएर घिउ, दूधको बिक्री बन्द गराइदिए । घिउ, दूध, मखन सबै नौजवान सत्याग्रहीहरूलाई सित्तैमा प्राप्त हुन लाग्यो । ठाउँ-ठाउँमा अखडा खुले जहाँ व्यायाम गरेर ब्रजका सबै ग्वालबाल दल र त्यहाँका जनता बडो बलवान् बने । तिनको विनाश गर्नलाई कंशका जति पनि सेनापति आए, ती सबै कन्हैया र उनका बलवान् साथीहरूद्वारा मारिए । त्यसपछि त्यो दिन पनि आइपुग्यो जबकि श्रीकृष्णले मथुरामा पुगेर कंशलाई मारेर आफ्नो हजूरबुबा उग्रसेन (कंशका पिता) लाई राजा बनाए । यस्ता हुनुहुन्थ्यो योगीराज महा बलवान्, ब्रह्मचारी तथा एकपत्नीव्रतधारी श्रीकृष्ण ! उनको जीवनका पुरुषार्थ तपाईंले महाभारतमा पढ्न सक्नुहुनेछ । गीता र महाभारत हामीले अवश्य पढ्ने गर्नुपर्दछ । हरि ॐ तत्सत् ।

## (सतचालीसौं भाग)

यसैप्रकार हाम्रा महाराणा गोगा वीर पनि कलिकालमा दानवीर गोभक्त, न्यायकारी, महादानी, दीनदु:खीहरूका सहायक र सबै देवताहरूमा परमपूजनीय छन् । म भन्दछु कि यिनीसमान् देवता न धरतीमा कहिले भएका छन्, न पछि नै हुनेछन् जसले सबैको मनले चाहेको इच्छा पूरा गरिदिऊन् । यिनै देवतालाई आफ्नी आमाको गर्भमा छँदा नै बोल्ने सौभाग्य प्राप्त भएको थियो । यो सौभाग्य न त भगवान् श्रीरामलाई प्राप्त थियो, न त श्रीकृष्णलाई, न जगदम्बे दुर्गालाई न त काली कलकत्तेवालीलाई । फेरि तपाईं नै भन्नुहोस्, यिनी समान् पूजनीय अरु कुन देवता छन् ? तर यी महान् कहलाउने पंडितहरूले गलत प्रचार गरेर यिनको कीर्तिमा धूलो फ्याँकेका छन् । जसरी बेवकूफले सूर्यलाई धुलो फ्याक्दा फर्केर उनैको मुखमा झर्दछ ।

त्यही दशा यी दगावाज पंडितहरूका सन्तानहरूको पनि भएको छ । कोही बसेर कुवामा पानी पिलाइरहेका छन्, त कोही मन्दिरमा बसी-बसी ठगीको काम गरिरहेका छन्, त कोही अभक्ष्य खानमा नै मग्न छन् । जो ठूला पंडितहरूका संतान हुन् उनीहरूले व्यापार गर्न शुरु गरिसकेका छन् वा नोकरी-चाकरी गरेर आफ्नो गृहस्थ धर्मको पालन-पोषण गरेर आफ्नो जीवनलाई सुख, शान्तिका साथ बिताइरहेका छन् । यिनीहरूले गोगा राणा र श्री गोरख गुरुको कीर्तिमा धब्बा लगाएका थिए । यी धूर्तहरूको त्यो धूर्तता लाख लुकाए पनि लुक्न सकेन । गुरु गोरखनाथ र जाहर वीरलाई जनता त महान् देवता सम्झेर पूजा गर्छन् नै, ती धूर्त पंडितका संतानहरू पनि आफ्नो दु:खबाट दु:खी भएर र गोगा मंडी पुगेर गोगा वीरसँग मनले चाहेको इच्छा लिएर फर्किन्छन् । यिनैका बडा बूढाले आफ्नो भाग्य चम्केको बेला बाहिर प्रचार गरेका थिए कि गोरखनाथ साधु हुनुभएको र जाहर वीर मुसलमान हुनुभएको थियो । उहाँहरू कलमा (मुस्लिम वन्दना) पढेर पृथ्वीमा बिलाउनु भएको थियो । हामीले त कलमा पढेर धरतीमा बिलाएको ठूलोभन्दा ठूलो मुसलमान पीर पैगम्बरलाई पनि सुनेनौ । सबै मरेपछि चिहानमा नै सुताइदिने गरिन्छ । हामीकहाँ के कम उपाय छ ? यी कुरालाई अब जनता राम्ररी सम्झन लागेका छन् । हरि ॐ तत्सत् ।

**महाराणा गोगा वीर पनि कलिकालमा दानवीर गोभक्त, न्यायकारी, महादानी, दीनदु:खीहरूका सहायक र सबै देवताहरूमा परमपूजनीय छन् । म भन्दछु कि यिनीसमान् देवता न धरतीमा कहिले भएका छन्, न पछि नै हुनेछन् जसले सबैको मनले चाहेको इच्छा पूरा गरिदिऊन् ।**

# गुरु र शिष्य

*यस स्तम्भअन्तर्गत हामीले सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'सूली ऊपर सेज पिया की' विषयको प्रवचनलाई 'गुरु र शिष्य' शीर्षकमा प्रकाशन गरिएको छ ।*

विवेकानन्द अत्यन्तै चिन्तामा थिए– कसरी हुन्छ ? यी बाँकी चक्रलाई जाग्रत कसरी गर्न सकिन्छ ? रामकृष्ण परमहंस सोचिरहेका थिए– 'सबै चक्र जाग्रत गरिदिँदा विवेकानन्द आफूजस्तै तुरियावस्थामा आउँछ, यदि तुरियावस्थामा आएमा म आफ्नो ज्ञानलाई व्यक्त गर्न सक्दिन, यो पनि आफ्नो ज्ञानलाई व्यक्त गर्न पाउँदैन, समस्या आउला। मेरो ज्ञान ममा नै सीमित भएर रहला ।' त्यसैले रामकृष्णको सबै ज्ञान विवेकानन्दको मुखबाट उच्चरित भयो। रामकृष्ण परमहंसले आफ्नो ज्ञानलाई दिन पाएनन् । रामकृष्ण परमहंसका जुन अनुभूतिहरू थिए, जुन ज्ञान थियो, जुन चेतना थियो, जुन काली-उपासना थियो, ती सबै विवेकानन्दको मुखबाट निस्सृत भए । विवेकानन्द एकप्रकारले रामकृष्णको मुख थिए ।

त्यसैले, हामी कसरी, कुन युक्तिहरूबाट पादपद्म बनेनौ भनेर तिमीले प्रश्न गरेका छौ । तिमी पादपद्म बनिरहेका छैनौ । गुरुलाई आवश्यक छ कि तिमीलाई पादपद्म बन्न नदिउन्, तिमी चाहे जतिसुकै चाहना गर, जतिसुक पुकारा गर, चाप्लुसी गर, तिमीले जतिसुकै पाउ दबाउ, यदि गुरु सावधान, सतर्क हुनुहुन्छ भने तिमीमाथि प्रहार गरुन्, हेरुन्, तिम्रो टेष्ट गरुन् किनकि उहाँलाई तिमीलाई बनाउन तीन सेकण्ड लाग्दछ । यदि मसँग पाँच लाख रूपैँया छ भने तिमीलाई लखपति बनाउन मलाई पाँच मिनेट लाग्ला, यसमा मलाई टाइम लाग्ने छैन। केवल पाँच लाख रूपैँयामध्ये एक लाख रूपैँया तिम्रो झोलामा हाल्नुछ । तर यसका लागि पहिले गुरु यो जानुन् कि यसले कतै यसको दुरूपयोग त गर्दैन ? किनकि अकस्मात् जुन चीज प्राप्त हुन्छ, बिना परिश्रम जुन चीज प्राप्त हुन्छ, त्यसको मूल्य र महत्त्वलाई शिष्यले बुझ्न सक्दैन, त्यसलाई आंक्न सक्दैन। अहं आउँछ, र त्यो अहं गुरुको लागि अत्यन्तै घातक हुन्छ, गुरुलाई आवश्यक छ कि त्यस अहंलाई समाप्त गरुन् ।

इतिहासलाई नियालौँ... र इतिहासमा यी गल्तीहरू भए, गुरुहरूले गल्ती गरेका छन्, शिष्यहरूले ती गल्तीहरूको लाभ उठाएर आफूलाई पतनको मोडमा उभ्याएका छन् ।

त्यसैले, गुरुलाई आवश्यक छ कि अब पादपद्म पैदा नगरुन् र शिष्यलाई आवश्यक छ कि ऊ विवेकानन्द बनोस् । यसका लागि तीन सिँढी छन्– त्यो समर्पणको सिँढी हो,

**तिमीले गुरुको सेवा गरेर कुनै गुन लगाइरहेका छैनौ। तिमी श्रद्धा गरेर पनि गुन गरिरहेका छैनौ । जस्तो गल्लीमा पचास जना मानिस उभिएका छन्, कोही काठ काटेर रोटी खाइरहेको छन, कोही फलाम पिटेर रोटी खाइरहेका छन्, त्यस्तै तिमी पनि रोटी खाएर पशुजस्तै जीवन व्यतीत गर्न सक्दछौ। तिम्रा पूर्वजहरूले पनि यही गरेका थिए, उनीहरूमा कुनै महानता, कुनै विद्वता थिएन ।**

त्यो सेवाको सिँढी हो, त्यो श्रद्धाको सिँढी हो । गुरूप्रति तिम्रो श्रद्धा छैन भने, तिमीमा सेवा गर्ने क्षमता छैन भने पनि व्यर्थ छ ।

तिमीले गुरुको सेवा गरेर कुनै गुन लगाइरहेका छैनौ । तिमी श्रद्धा गरेर पनि गुन गरिरहेका छैनौ । जस्तो गल्लीमा पचास जना मानिस उभिएका छन्, कोही काठ पिटेर रोटी खाइरहेको छ, कोही फलाम पिटेर रोटी खाइरहेको छ, कुनै अर्कै तरीकाबाट रोटी खाइरहेको छ र तिमी पनि रोटी खाएर पशुजस्तै जीवन व्यतीत गर्न सक्दछौ । तिम्रा पूर्वजहरूले पनि यही गरेका थिए, उनीहरूमा कुनै महानता, कुनै विद्वता थिएन ।

मीराले भनेकी थिइन्– सूली ऊपर सेज पिया की, किस विधि मिलनो होय' पिया त अत्यन्तै उच्चस्तरको सूलीमाथि छ, त्यहाँसम्म म कसरी गएर मिलूँ ? यदि मिल्नु नै छ भने मलाई त्यहीँ गएर मिल्नु छ । मैले सूलीको घोचाइ महसुस गर्नै पर्दछ । त्यो घोचाइ महसुस गर्ने क्षमता, त्यो पीडा झेल्ने क्षमताले नै तिमीलाई आफ्नो प्रियसँग मिलाउँछ ।

यदि ज्ञानको त्यस पून्जलाई प्राप्त गर्नुछ भने तिमीलाई यस कसीमा कस्नु आवश्यक छ । एक-एक कसीलाई तिमीले झेल्नै पर्दछ । त्यो प्रहार गरोस्, त्यसलाई तिमीले सहनु आवश्यक छ । फेरि पनि तिमीले मुस्कुराउनु पर्दछ, फेरि पनि श्रद्धा व्यक्त गर्नै पर्दछ– मनले, हृदयले, चेतनाले, प्राणले । तिमीले देखेको हुनुपर्दछ कि जब सर्दीको ऋतुमा मानसरोवरको झील पूरै बरफबाट ढाकिन जान्छ । यति धेरै बरफ जम्मा हुन्छ कि त्यहाँ फुटबलको चौर निर्माण हुन पुग्दछ, त्यसमाथि फुटबल खेल्न सकिन्छ । हाँस त्यसबेला मानसरोवरमाथिबाट उड्दछ र हजार मील टाढा रूखको आश्रय लिन्छ । छोटो एउटा तवांग झील छ, जुन तातो पानीको झील हो, त्यस झीलको आश्रय लिन्छ । तवांग झील मात्र एक यस्तो झील हो जसमा सर्दीमा पनि पानी तातो रहन्छ । हजार मील टाढा, त्यस तवांग झीलमा आश्रय लिन्छ, त्यसै रूखमा आश्रय लिन्छ जसमा गत वर्ष बसेको थियो । त्यसले रूख बदल्दैन– रूख हरियै भए पनि, सर्दीमा पात झरेको अवस्थामा पनि । त्यस हाँसले त्यसै रूखको सहारा लिन्छ, पंक्षीहरूमा पनि यति समझदारी छ । क्रमशः

जय गुरुदेव !

# हार्दिक समवेदना

स्व. देवी धमला

स्व. लक्ष्मी अधिकारी

स्व. पूर्णकला बाँस्तोला

स्व. पूर्णिमा गुरुङ

स्व. मेवा बस्ताकोटी

स्व. सुनिल वि. क.

मिति २०६५ साल ज्येष्ठ ७ गते लेखनाथ पोखराबाट गोरखातर्फ आउँदै गरेको बस घाँसीकुवानजिकै छिर्कनीमा दुर्घटना हुँदा लेखनाथ नगरपालिका-७ की देवी धमला, वडा नं. ८ की लक्ष्मी अधिकारी, पूर्णकला वास्तोला, पूर्णिमा गुरुङ, राखिडाँडा-४ की मेवा बस्ताकोटी र वडा नं. ३ का सुनिल वि.क.को निधन भएकोमा यस संस्था गहिरो दु:ख व्यक्त गर्दछ। साथै यस अपूरणीय क्षतिमा शोकसन्तप्त परिवारप्रति हार्दिक श्रद्धाञ्जली अर्पण गर्दै दिवंगत आत्माको चिरशान्ति र घाइतेहरूको शीघ्र स्वास्थ्यलाभका लागि परमपूज्य सद्‌गुरुदेवहरूको श्रीचरणकमलमा सभक्ति प्रार्थना गर्दछौं।

**सिद्धाश्रम शक्ति केन्द्र**

**बसुन्धरा, काठमाडौं।**

## हार्दिक श्रद्धाञ्जली

जन्म मिति: २००२ साल

स्वर्गारोहण मिति: २०६५ ज्येष्ठ २६ गते

सिद्धाश्रम शक्ति केन्द्रमा सक्रियरूपमा गुरुकार्यमा लागिरहनु भएका साधक अशोक देवकोटाको यही ज्येष्ठ २६ गते आइतबार भएको असामयिक निधनमा गहिरो दु:ख व्यक्त गर्दै यस दु:खद घडीमा दिवंगत आत्माको चिर शान्तिको कामना गर्दै शोक सन्तप्त परिवारमा धैर्य धारण गर्ने शक्ति प्रदान गरिदिनुहोस् भनी परमपूज्य सद्‌गुरुदेवहरूको श्रीचरणमा सभक्ति प्रार्थना गर्दछौं।

**सिद्धाश्रम शक्ति केन्द्र**

**बसुन्धरा, काठमाडौं।**

## हार्दिक श्रद्धाञ्जली

जन्म मिति: २०३५ भाद्र ८ गते

स्वर्गारोहण मिति: २०६५ वैशाख २७ गते

सिद्धाश्रम शक्ति केन्द्र, लामाचौर, पोखरामा सक्रियरूपमा गुरुकार्यमा लागिरहनु भएकी साधिका सङ्गीता थापाको यही बैशाख २७ गते भएको असामयिक निधनमा गहिरो दु:ख व्यक्त गर्दै यस दु:खद घडीमा दिवंगत आत्माको चिर शान्तिको कामना गर्दै शोक सन्तप्त परिवारमा धैर्य धारण गर्ने शक्ति प्रदान गरिदिनुहोस् भनी परमपूज्य सद्‌गुरुदेवहरूको श्रीचरणमा सभक्ति प्रार्थना गर्दछौं।

**सिद्धाश्रम शक्ति केन्द्र**

**लामाचौर प्रस्तावित सम्पर्क कार्यालय**

**पोखरा, कास्की।**

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले लेख्नुभएका हस्तरेखा सम्बन्धी पुस्तकबाट विभिन्न रोचक तथ्यहरूलाई क्रमशः प्रकाशित गर्दै लगिएको छ । आशा छ, यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

### माझी औंला

यसलाई अंग्रेजीमा 'फिंगर अफ सेटर्न' भनिन्छ किनकि यसको मूलमा शनि पर्वत हुन्छ । सामान्यतः यो औंला चोरी र साइँली औंलाभन्दा लामो हुन्छ । तर यो लम्बाई भने १/४ इंचभन्दा बढी हुनु हुँदैन । यदि यो १/४ भन्दा बढी छ भने त्यस व्यक्तिको पूरा जीवन दुःख, अभाव र दिग्दारीमा बित्दछ । यदि यो औंला मात्र १/४ इंच मात्र बढी छ भने त यस्तो व्यक्ति बुद्धिमान, शुभकार्यहरूलाई गर्ने तथा उन्नतितर्फ अग्रसर हुने हुन्छ । यस्तो व्यक्ति नै समाजमा सम्मान तथा यश प्राप्त गर्दछ । यदि माझी औंला चोरी औंलाभन्दा आधा इंच वा त्यसभन्दा पनि धेरै ठूलो छ भने व्यक्ति निश्चय नै हत्यारा हुन्छ ।

यदि माझी औंला लामो छ भने व्यक्ति रोगी तथा कामी हुन्छ । यदि यो औंला लामो हुनुको साथसाथै गांठो परेको र फुलेको छ भने त्यो व्यक्ति स्वार्थी तथा चिन्ताहरूबाट ग्रस्त रहन्छ । यो औंला लामो छ, साथसाथै यसको माथिको भाग वर्गाकार छ भने यस्तो

# आफ्नो हात आफैं हेरौं

व्यक्ति गम्भीर स्वभावको हुन्छ तथा जीवनमा उत्तरदायित्वपूर्ण पदमा सफलताका साथ कार्य गर्दछ । यदि यो औंला लामो छ तर माथि चेप्टो छ भने यस्तो व्यक्ति कलाको क्षेत्रमा विशेष सफलता प्राप्त गर्दछ । कलाको माध्यमबाट नै उच्चस्तरीय सम्मान, ख्याति एवं प्रशंसा प्राप्त गर्दछ । यदि माझी औँलाको पहिलो पर्व लामो छ भने व्यक्तिले आत्महत्या गर्दछ । यदि दोस्रो पर्व अपेक्षाकृत लामो छ भने यस्तो व्यक्ति व्यापारिक क्षेत्र विशेष गरी मेशिनरीसम्बन्धी कार्यमा विशेष लाभ प्राप्त गर्दछ । यदि तेस्रो पर्व धेरै लामो छ भने यस्तो व्यक्ति जरुरतभन्दा ज्यादा कंजूस हुन्छ र समाजमा अपयशको भागी हुन्छ । यदि माझी औँलाको माथिल्लो भाग चोरी औँलातर्फ झुकेको छ भने उसमा जरुरतभन्दा धेरै आत्मविश्वास हुन्छ र यस आत्मविश्वासको कारण नै त्यो आफ्नो लक्ष्यमा पुग्न सफल हुन्छ । यदि यसको माथिको साइँली औँलातर्फ झुकेको छ भने यस्तो व्यक्ति भाग्यमाथि विश्वास गर्ने एवं संगीत, कला आदिमा रुचि राख्ने हुन्छ ।

### साईंली औंला

अंग्रेजीमा यस औंलालाई 'फिंगर अफ अपोलो' भनिन्छ किनकि यसको मूलमा सूर्यको स्थान हुन्छ । सामान्यत यो औँला माझीभन्दा छोटो तर चोरी औँलाभन्दा अपेक्षाकृत लामो हुन्छ । कुनै हातमा यसको अपवाद पनि देखिएको पाइन्छ । यदि यो औँला चोरी औँलाभन्दा लामो हुन्छ भने यस्तो व्यक्तिले उन्नति गर्दछ र यस्तो व्यक्तिमा दया, प्रेम, स्नेह आदि मानवोचित गुण जरुरतभन्दा धेरै हुन्छ । तर यदि यो औँला माझी औँला बराबर हुन्छ भने यस्तो व्यक्ति अत्यन्त दुष्ट एवं स्वार्थी हुन्छ । यस्तो व्यक्ति आफ्नो स्वार्थको कारण अरुको अधिकभन्दा अधिक अहित गर्नमा पनि चुक्दैन । तर यस्तो व्यक्ति भाग्यवादी हुन्छ तथा आफ्नो धनको अधिकांश भाग जुवा, सट्टा आदि गलत कार्यमा लगाउँछ । यस्तो व्यक्तिलाई असभ्य तथा निर्दयी मान्नु पर्दछ ।

यदि साइँली औँलाको झुकाव कान्छी औँलातर्फ छ भने व्यक्तिले व्यापारबाट विशेष लाभ प्राप्त गर्दछ र उसको सारा जीवन व्यापारिक कार्यहरूमा नै व्यतीत हुन्छ । तर यस औँला माझी औँलातर्फ झुकेको छ भने त यस्तो व्यक्ति चिन्तनप्रधान र आत्मकेन्द्रित हुन्छ तथा जीवनमा केही यस्तो कार्य गरेर जान्छ जसबाट समाज र देशले पछि उसलाई याद गर्न सकोस् ।

यदि साइँली औँला छोटो छ भने त्यो व्यक्ति कलाकृतिहरू अथवा चित्र एवं पुराना वस्तुहरूबाट धन संचय गर्दछ । यदि यसको अघिल्लो भाग चुच्चो छ भने त्यो व्यक्ति एक सफल संगीतज्ञ अथवा चित्रकार हुन्छ । यदि अगाडिको भाग वर्गाकार छ भने यस्तो व्यक्तिले कलाको माध्यमबाट धन र यश दुवै कमाउँछ । यदि माथिको भाग चेप्टो छ भने इतिहाससँग सम्बन्धित कार्यमा उसले विशेष रुचि लिन्छ । यदि दोस्रो पर्व लामो छ भने आफ्नो प्रतिभाको बलबाट त्यो व्यक्ति अत्यन्तै माथि उठ्न सक्दछ । यदि तेस्रो पर्व लामो तथा चौडा छ भने आफ्नो जीवनमा त्यो राष्ट्रव्यापी सम्मान अर्जित गर्दछ । यदि यो औँला चोरी औँला बराबर लामो छ भने उसलाई विशेष ख्यातिको इच्छा लागिरहन्छ । यदि यो औँला माझी औँला बराबर लामो छ भने उसको जीवनमा कैयौँ कार्य आकस्मिकरूपबाट गठित हुन्छ र अन्तमा उसले सफलता प्राप्त गरेरै छोड्दछ । क्रमश: जय गुरुदेव !

# त्रिशूल जात्रा

आषाढ कृष्ण अष्टमीका दिन काठमाडौँको देवपट्टनमा मनाइने स्थानीय उत्सवलाई त्रिशूल यात्रा भनिन्छ । यो मनोरञ्जनात्मक यात्रा हो र काठमाडौँको देवपट्टनमा यो यात्रा गरिन्छ । यात्राको विधानअनुसार आर्यघाटको वत्सलेश्वरीको मन्दिरबाट रथ बालिकालाई त्रिशूल रोपेर मारेको देखिने गरी निकालिन्छ । दोस्रो रथ त्यस्तै दृश्यसहित बज्रघरबाट निकालिन्छ । यी दुवै रथहरू जयवागेश्वरी मन्दिरतर्फ आउँछन् । तेस्रो रथमा जयवागेश्वरीबाट तीनवटी बालिकालाई एउटै त्रिशूलले मारेको दृश्य देखाइएको हुन्छ । वत्सलेश्वरी र बज्रघरका रथहरू जयवागेश्वरी आइपुगेपछि तीनवटै रथहरूको संयुक्त यात्रा शुरु हुन्छ ।

भगवान् पशुपतिनाथको मन्दिर परिसरमा भुनेश्वरी मन्दिरभित्र रातो वस्त्रले ढाकिएकी देवीको पूजा तथा यात्रा रहस्यमय छ । वंशावलीअनुसार राजा यक्ष मल्लको पालामा वि.सं. १५७० आषाढदेखि शुरु भएको भनिएको 'मचा: तिया यात्रा' अर्थात् त्रिशूलयात्रा, माता भुवनेश्वरीका पूजारी तान्त्रिक मुनिबन्धु (भूमिबन्धु ?) आचार्यसँग सम्बन्धित रहेको कुरा कुलचन्द्र कोइरालाको 'पशुपतिनाथ' पुस्तकमा उल्लेख छ ।

यो त्रिशूल यात्रा आषाढ कृष्ण अष्टमीका दिन देवपट्टनमा शुरु हुन्छ । नौवटा खटमा मुसल, शंख, त्रिशूल, खड्ग, पाश, कुन्त (तरबार), बलिछरी आदि आयुधले युक्त उक्त तान्त्रिक विधिअनुसारको खटमा नौजना कुमार-कुमारीहरूलाई राखी आषाढ कृष्ण अष्टमीको दिन ईशानेश्वर महादेवको प्रदक्षिणा गरी यात्रा सम्पन्न गरिन्छ । हिजो-आज तीनवटा खट मात्र प्रयोग गरेको देखिन्छ । साथै, जयवागेश्वरीबाट कुमार, गणेश र कुमारीको एउटा खट, बज्रघरबाट कुमारको एउटा खट, वत्सलेश्वर नजिक जयमङ्गलादेवीको स्थानबाट एउटा खट उठाउने व्यवस्था रहेको छ । उक्त तेस्रो खटको आर्थिक भार माता जगदम्बा त्रिपूरासुन्दरी भगवती भुवनेश्वरी पीठको गुठीले उठाउने व्यवस्था छ । तान्त्रिक विधिअनुसार यात्रा अवधिभरि कुमार-कुमारीलाई बेहोश गराइन्छ । कुमार कुमारीहरू बत्तीस लक्षणले युक्त हुनुपर्दछ ।

त्रिशूल यात्रामा भाग लिएका मानिसहरूले हात-हातमा रूखका हाँगा र बोक्रा समाती राक्षसहरूलाई गाली गरिरहेका हुन्छन् । एउटी आइमाई घण्टी बजाउँदै पछि-पछि हिँडिरहेकी हुन्छिन् । सिफलबाट निकालिएको त्रिशूल यात्रा सिफल टोल, दथुटोल, पाचाटोल, चलेपाखा परिक्रमा गरी आ-आफ्नै स्थानमा गएर विसर्जन हुन्छ र बालिकाहरूलाई आर्यघाटमा लगी स्नान गराई दाहसंस्कारका लागि सुत्न लगाइन्छ । सुतेका बालिकाहरूलाई आफै नउठेसम्म उठाउनु हुँदैन भन्ने मान्यता रहेको छ ।

उनीहरू आफै उठेपछि पूजा गरी विधिपूर्वक घर-घर भित्र्याइन्छ । यसलाई आर्यघाटबाट मुर्दा व्युँतिएर आएको विश्वास गर्दै सगुनस्वरूप चौरासी व्यञ्जनसहित भोजन गराइन्छ ।

त्रिशूल यात्राका विषयमा अनेक किंवदन्तीहरू प्रचलित छन् । एक

किंवदन्तीअनुसार राजा नरेन्द्रदेवका गुरु बन्धुदत्त आचार्य हुनुहुन्थ्यो। उहाँ तन्त्रविद्यामा धेरै पारंगत हुनुहुन्थ्यो। उहाँ इच्छाएको वस्तु प्राप्त गर्न सक्नुहुन्थ्यो र देवीदेवताहरूलाई पनि वशमा राख्न सक्नुहुन्थ्यो । उनकै समयमा नागार्जुन पर्वतबाट सहरमा आएर एउटा राक्षसले बालबच्चा चोरेर हाहाकार मच्चाएको थियो । राजाले पनि राक्षसको लीलादेखि चिन्तित भई गुरु बन्धुदत्तसँग सल्लाह गरे । बन्धुदत्तले राजासँग चालीस-पचास जना बलिष्ठ सिपाहीको माग गर्नुभयो। सिपाहीहरू प्राप्त भएपछि तिनलाई राक्षस आउने बाटोमा लुकेर बस्न लगाउनु भयो । राक्षस आएपछि लुकेका सिपाहीहरूले हमला गरे। राक्षस मायावी रूप धारण गरी अलप भयो र काठमाडौं सहरमा गएर लुक्यो । सिपाहीहरू राक्षसलाई खोज्दै काठमाडौं सहर पुगे। काठमाडौंबासीले ढाँटेर कोही आएको छैन भनी राक्षसलाई बचाए । सिपाहीहरू राक्षसलाई खोज्दै नागार्जुन पर्वतसम्म गए र उसका बच्चालाई पक्रेर ल्याई त्रिशूलले रोपेर मारी दुनियाँको उत्साह बढाए। त्यसपछि अब उपरान्त त्यो राक्षसले जनताका छोराछोरी चोर्छ भने त्यसलाई पनि यस्तै गरी मारिनेछ भन्ने डर देखाउन यो यात्रा प्रारम्भ गरिएको थियो। त्यसैको सम्झनास्वरूप प्रत्येक आषाढ कृष्ण अष्टमीका दिनमा यस्तो यात्रा सम्पन्न गर्ने चलन चल्दै आएको हो ।

अर्को एक किंवदन्तीअनुसार उनै बन्धुदत्त आचार्यले भुवनेश्वरी देवीलाई आफ्नो मन्त्र साधनाद्वारा खुशी पार्नुभएको थियो । माता भुवनेश्वरीले प्रकट भई 'हे मुनी बन्धुदत्त ! तिमीदेखि म प्रसन्न भएँ, जे इच्छा छ माग, म वरदान दिन्छु' भन्नुभएछ। बन्धुदत्तले लोकरक्षाका लागि अमृतको घडा पाऊँ भनेर माग्नु भयो । देवीले पनि भोलि पूजा गर्ने बेलामा 'तिम्रो इच्छा पूरा हुनेछ' भनी अन्तर्ध्यान हुनुभयो। भोलिपल्ट पूजा गर्ने बेलामा देवी पुन: प्रकट भएर वरदान माग्न भन्नुभयो । उहाँले त्यही माग दोहोऱ्याउनु भयो । त्यसपछि देवीले 'तिम्रो पछाडि जो छ, मलाई उसकै बलि देऊ, अनि मात्र तिम्रो इच्छा पूरा हुनेछ' भनी देवी अलप हुनभयो। बन्धुदत्तले फर्केर हेर्दा आफ्नै छोरो परेछ। तैपनि लोककल्याणका लागि छोरोको बलि दिएर भए पनि अमृत प्राप्त गर्ने र त्यही अमृतले छोरालाई पनि पुनर्जीवन दिने सोच बनाई छोराको बलि दिनुभयो । देवी पुन: प्रकट हुनुभयो र 'छोरो बलि चढाएको कसैलाई थाहा नहुने गरी सात कोठाभित्र ताल्चा लगाएर कामरूप कामाक्षामा रहेको अमृतको घडा लिन जानू । त्यही अमृत ल्याएर छोरालाई पनि बचाई लोकको भलो गर्नू' भनी अन्तर्ध्यान भइन्। देवीले भन्नु भए अनुसार नै बन्धुदत्तले गर्नुभयो । जानु अघि आफ्नी पत्नीलाई आफू नफर्किदासम्म लाश राखेको कोठा नखोल्नू भन्नु भएको थियो । त्यसै दिनदेखि छोरो हराएकोले उहाँकी पत्नी अत्यन्तै चिन्तित भइन् । एकदिन भगवान् पशुपतिनाथले सपनामा 'तिम्रो छोरो मरेकाले बन्धुदत्तले उसलाई सात कोठाभित्र राखेर आफू पागलजस्तै भई देश छोड्यो' भन्नुभएछ। उनले सपनालाई माइतीमा गएर सुनाइन् । माइतीले लाशलाई सडाउनु हुँदैन क्रियाकर्म गर्नुपर्दछ भन्दै सात कोठाका सबै ताल्चा फोरेर लाश निकाले। सबैको सल्लाहबमोजिम भष्मेश्वर घाटमा लगेर दाहसंस्कार गरियो । बन्धुदत्त कामाक्षाबाट अमृतको घडा लिएर फर्कँदै गर्दा काठमाडौंबासीले बाटैमा त्यो घटना सुनाइदिए । बन्धुदत्त साह्रै चिन्तित हुनुभयो । आफूले अह्राएको कुरा पनि नमान्ने स्वास्नीको के मुख हेर्नु भनी अमृतको घडा बाटैमा गाडेर अलप हुनुभयो । गुरुको दु:खद खबर थाहा पाएपछि राजा नरेन्द्रदेवले उहाँको सम्झनामा सबै घटनाको सम्झना हुने गरी त्रिशूल यात्रामा बन्धुदत्तको छोराको समेत चित्रण गर्दै यात्रालाई अलि विस्तार गरे । यात्रामा राक्षसलाई लुकाउने काठमाडौंबासीलाई तथानाम गाली गरिन्छ। गाली गर्नु, सुन्नु र सुनाउनु यात्राको मुख्य विशेषता रहेको छ।

जय गुरुदेव !

# ब्रह्मचर्य

**'ब्रह्मलाई जानेर, सोअनुसार चल्ने क्रिया जसले गर्दछ ऊ नै ब्रह्मचारी हो ।'**
**–परमपूज्य सद्‌गुरुदेव ।**

आजभोलि ब्रह्मचर्यको गलत अर्थ लगाइएको पाइन्छ । सयकडौं वर्षदेखि यस शब्दको जति दुर्गति भएको छ, त्यति अन्य कुनै शब्दको भएको छैन । हामीले अविवाहित रहनुलाई ब्रह्मचर्य भन्दछौँ, जो कुमार रहन्छ त्यसलाई ब्रह्मचारी मान्दछौँ । तर ब्रह्मचर्य त ब्रह्मअनुसार चल्ने र ब्रह्मको जस्तो आचरण गर्ने प्रक्रियासँग सम्बन्धित छ । जो ब्रह्मसमान आचरण गर्न सक्दछ त्यो ब्रह्मचारी हो र यो नै ब्रह्मचर्यको तात्पर्य हो । जब व्यक्ति ब्रह्मसम्म पुग्दछ तब ब्रह्मचर्यको अवस्था प्राप्त गर्दछ ।

ब्रह्मचारीसँग ध्यानको कुनै सीधा सम्बन्ध हुँदैन । ध्यानको लागि यो जरुरी छैन कि ऊ ब्रह्मचारी बनोस् किनकि ध्यानको अन्तिम अवस्था नै ब्रह्मचर्य हो । जब व्यक्ति त्यस स्थितिमा पुग्दछ तब ऊ ब्रह्मचारी कहलाउँदछ । प्ररम्भमा कसरी ब्रह्मचारी बन्न सक्दछ ? प्रारम्भमा त शरीरचारी बन्न सक्दछ, ब्रह्मचारी वा ब्रह्मचर्य त धेरै माथिल्लो र उच्चताको अवस्था हो ।

मानवजीवनको उद्देश्य धर्म, अर्थ, काम र मोक्ष प्राप्त गर्नु हो । आयुर्वेदमा त्रिउपस्तम्भका रूपमा आहार, निद्रा र ब्रह्मचर्यलाई मानिएको छ । ब्रह्मचर्य शब्दको अर्थ अत्यन्त गुह्य, रहस्यमय र व्यापक छ । धेरै मानिसहरू ब्रह्मचर्यको अर्थ जीवनभरि कुमार रहनु अथवा जटाजुट आदि भेष बनाएर घुमिरहनु सम्झन्छन् तर ब्रह्मचर्यको सम्बन्ध न भेषभुषासँग छ, न त कुमारपनसँग नै छ । स्थूल अर्थमा यसको अर्थ काम-दमन वा वीर्यरक्षासँग छ तर यसबाट नै यसको अर्थ पूरा हुँदैन । ब्रह्मचर्यको पूरा अर्थ हुन्छ– वीर्य रोक्नु, वेद ज्ञान प्राप्त गर्नु, सच्चिदानन्द ब्रह्ममा आश्रय गर्नु । वीर्य एउटा दिव्यतेज हो, जसको संग्रहबाट वेदज्ञान र आत्मसाक्षात्कार हुन्छ अन्यथा हुँदैन, कहिल्यै हुँदैन । (खप्तडबाबाकृत स्वास्थ्य विज्ञान ।

स्वास्थ्य रक्षाको निमित्त अत्यन्त आवश्यक र महत्त्वपूर्ण साधन ब्रह्मचर्य हो । मनुष्यको शारीरिक, मानसिक, सामाजिक आदि सम्पूर्ण शक्ति ब्रह्मचर्यमाथि निर्भर छ । २५ वर्षसम्म अखण्ड ब्रह्मचारी भएर त्यसपछि गृहस्थ आश्रममा प्रवेश गरी शास्त्रानुसार केवल सन्तानोत्पत्तिका लागि ऋतु समयमा स्त्रीसंयोग गर्नाले ब्रह्मचर्यव्रत टुट्दैन । अर्थात् गृहस्थ आश्रममा बसेर पनि ब्रह्मचर्य पालन गर्न सकिन्छ । प्राचीन पाश्चात्य देशहरूमा पूर्णरूपमा राष्ट्रद्वारा ब्रह्मचर्य व्रत पालना गरिएको उदाहरण युनानको स्पार्टा देशमा मिल्दछ जसको फलस्वरूप थमापालीको युद्धमा इरानी आक्रमणकारी सम्राट जेरकसीज इरानीमा कैखुसरीका ३ लाख सैनिकलाई स्पार्टाका केवल ३०० वीर ब्रह्मचारीहरूले आफ्नो बलिदान दिएर विरोधी सैन्यलाई अघि बढ्न रोकी सम्पूर्ण युनानको स्वतन्त्रतालाई स्थिर राखेका थिए । यस विषयलाई राम्ररी सम्झनुपर्दछ ।

**कर्मणा मनसा वाचा सर्वावस्थासु सर्वदा ।**
**सर्वत्र मैथुनत्यागं ब्रह्मचर्यं प्रचक्षते ॥**
**–वशिष्ठसंहिता**

अर्थात्, शरीर, मन र वचन यी तीनै कुराहरूबाट सबै अवस्थाहरूमा, सदासर्वदा तथा सबै स्थानमा मैथुन त्याग गर्नुलाई ब्रह्मचर्य भनिन्छ । महाभारतमा भनिएको

छ– ब्रह्माको रूप नै ब्रह्मचर्य हो । ब्रह्मचर्य सबै धर्महरूभन्दा माथि हुन्छ । यसले मानवलाई सर्वश्रेष्ठ गति प्राप्त हुन्छ । ब्रह्मचर्यमा शरीर, बुद्धि र आत्माको रक्षा समाहित भएको हुन्छ । कामचारी त्यो व्यक्ति हो जो सदैव इन्द्रिय सुखमा रहन्छ र ब्रह्मचारी त्यो हो जो सदैव इन्द्रिय जयको अवस्थामा रहन्छ । कान, छाला, आँखा, जिब्रो र नाक आदि इन्द्रियहरूको इच्छानुसार शब्द, स्पर्श, रूप, रस र गन्ध प्रवृत्तिलाई काम भनिन्छ । यी इन्द्रियहरूको तृप्तिबाट शरीरले क्षणिक सुख प्राप्त गर्दछ ।

**ब्रह्मचर्यका आठ अङ्गहरू (अष्टाङ्ग ब्रह्मचर्य)–**

**स्मरणं कीर्तनं केलिः प्रेक्षणं गुह्यभाषणम् ।**

**सङ्कल्पोऽध्यवसायश्च क्रियानिर्वृत्तिरेव च ॥**

**-दक्षस्मृति**

पुरुष अर्थात् स्त्रीद्वारा एक अर्काको स्मरण गर्ने, गुणगान गाउने, क्रिडा गर्ने, कामुक दृष्टिले हेर्ने, एकान्तमा भाषण गर्ने, मैथुनको लागि सङ्कल्प गर्ने, तदर्थ सम्भोगका लागि प्रयत्न र प्रयत्न सम्भोग यी आठ अंगलाई मैथुन र यिनीहरूको विपरीत आठ अङ्गलाई ब्रह्मचर्य भनिन्छ ।

**ब्रह्मचर्यको प्रकार** : ब्रह्मचर्यलाई मुख्यरूपमा दुई भागमा विभाजन गरिएको पाइन्छ– नैष्ठिक ब्रह्मचर्य र वैवाहिक ब्रह्मचर्य ।

**नैष्ठिक ब्रह्मचर्यको उमेरः** वैवाहिक जीवनभन्दा पहिले ज्ञान आर्जनको समय अर्थात् २५ वर्षभन्दा तलको उमेरमा नैष्ठिक ब्रह्मचर्य पालन गरिन्छ । यसबाट व्यक्ति ज्ञानी, विद्वान, धैर्यवान्, बलवान्, सत्जीवि र सफल हुन्छ साथै उसलाई वीर्यलाभ पनि हुन्छ भनेर शास्त्रमा उल्लेख पाइन्छ ।

**नैष्ठिक ब्रह्मचर्यको उद्देश्य–** नैष्ठिक ब्रह्मचर्यको उद्देश्य सफल जीवनयापन र जीवनशैलीमा परिवर्तन ल्याउनु हो । कन्जुसले जसरी घरको धनलाई जम्मा गर्दछ, त्यसरी नै शुक्रलाई शुक्राशयमा जम्मा गर्नु ब्रह्मचर्यको उद्देश्य होइन र हुन पनि सक्दैन किनकि शुक्राशयमा जम्मा भएको शुक्र इच्छा वा अनिच्छाले स्खलित नभई रहन सक्दैन । यो नै शरीरको धर्म हो । शङ्कराचार्यका अनुसार शरीरमा उत्पन्न हुने शुक्रलाई शुक्राशयमा जम्मा हुनुभन्दा पहिले ओज नामक ऊर्ध्व वा अर्धस्थितिमा रूपान्तिरित गर्नु ब्रह्मचर्यको उद्देश्य हो र यसमा जो सफल हुन्छ त्यो अस्खलितोर्ध्वरेतस्क ब्रह्मचारी हुन्छ ।

### वैवाहिक ब्रह्मचर्य

**स्त्रीणां च प्रेक्षणात्स्पर्शाद्धास्यश्रृङ्गारभाषणात् ।**

**स्पन्दते ब्रह्मचर्यं च, न दारेष्वृतुसङ्गमात् ॥**

**-आचारमयूख**

अन्य स्त्रीहरूसँग प्रेक्षण, स्पर्श, हाँस-परिहाँस तथा श्रृङ्गार भाषणले ब्रह्मचर्य कम्पित हुन्छ । तर स्वपत्नी साथ ऋतुकालमा गरिने शारीरिक सम्पर्कबाट ब्रह्मचर्य कम्पित हुँदैन । त्यसैलाई वैवाहिक ब्रह्मचर्य भनिन्छ । त्यसैगरी वसिष्ठसंहितामा पनि भनिएको छ–

**ऋतावृतौ स्वदारेषु सङ्गतिश्च विधानतः ।**

**ब्रह्मचर्यं च तत्प्रोक्तं गृहस्थाश्रमवासिनाम् ॥**

अर्थात्, शास्त्रको आदेशअनुसार प्रत्येक ऋतुकालमा स्वपत्नीसँग गरिएको सम्भोग गृहस्थ आश्रमबासीको लागि ब्रह्मचर्य कहलाउँछ । प्रश्नोपनिषद्मा भनिएको छ– 'जसले दिनमा सम्भोग गर्दछ उसले प्राणको नाश गर्दछ र जसले नियमानुसार रात्रिमा सम्भोग गर्दछ त्यो नै ब्रह्मचर्य हो ।' मनुका अनुसार निन्द्य ६ र अन्य ८ रात्रिमा स्त्री समागम वर्जन गर्ने, ऋतुकालको दश प्रशस्त रात्रिमध्ये पर्व वर्जित दुई रात्रिमा स्त्रीसँग समागम गर्ने जुनसुकै आश्रममा बस्ने व्यक्ति पनि ब्रह्मचारी हुन्छ ।

**वैवाहिक ब्रह्मचर्यको उमेरः**
विद्यार्थी जीवन पार गरिसकेपछि अर्थात् पच्चीस वर्ष नाघिसकेपछि वैवाहिक ब्रह्मचर्यको पालना गरिन्छ । यसबाट व्यक्ति बलवान् र शक्तिसम्पन्न भएर सत्जीवि रहन्छ । त्यसैले विवाहपछि पनि वैवाहिक ब्रह्मचर्यको पालन गर्नुपर्ने कुरा शास्त्रमा उल्लेख भएको पाइन्छ । १. जो अन्य स्त्रीसँग हाँसो, ठट्टा गर्दैन र उसबाट आनन्द लिंदैन । २. जो स्वपत्नीरत हुन्छ । ३. जो ऋतुकाल अभिगामी हुन्छ । ४. जो दिनमा स्त्री सहवास गर्दैन । ५. जो मात्र रातमा स्त्री सहवास गर्दछ । ६. महिनाभरिमा मात्र २ राति सहवास गर्दछ त्यो नै वैवाहिक ब्रह्मचारी कहलाउँछ ।

अर्थात्, वैवाहिक ब्रह्मचर्य पच्चीस वर्षभन्दा माथिका व्यक्तिहरूले पालना गर्नुपर्दछ जुन सफल जीवनको सूचक हो । योगी, संन्यासीका साथै सफल बन्न चाहने हरेक व्यक्तिहरूबाट पनि यस ब्रह्मचर्यको पालना हुनुपर्दछ । गर्भिणी हुना साथ छ महिनासम्म तथा प्रसुति भएपछि बच्चाको दाँत निस्किसकेपछि पुरुषले पत्नीसँग समागमको इच्छा गर्दा तथा तदनुसार समागम गर्दा त्यसले ब्रह्मचर्यमा केही फरक पर्दैन ।

**विवाहको उद्देश्यः** गृहस्थाश्रमको प्रमुख उद्देश्य प्रजोत्पादन हो । विवाह दुई आत्माको मिलन हो । अलग-अलग शरीरलाई समागम गरी वंश रक्षा र वृद्धिको लागि गरिने प्रजोत्पादन प्रक्रियालाई विवाह भनिन्छ । विवाह कामोपयोगको लागि मात्र होइन राम्रो प्रजोत्पादनको लागि हो । कामपयोगले तेज, बुद्धि र बल यिनीहरूको नाश निश्चित हुन्छ । कामुक भएर विलाशी अभिलाषाले विवाहको इच्छा राख्नुहुँदैन । स्वच्छ हृदयले गर्भोत्पादनको उद्देश्यले तेज, बुद्धि र बलको रक्षा गरी विवाहको महत्त्व पूर्ण गर्नुपर्दछ । योग्य स्त्री, पुरुषले निर्मल हृदयले एवं स्वेच्छाले प्रजनन निरन्तरताको लागि गरिने प्रयासले विवाहको उद्देश्य पूरा हुन्छ । क्रमशः

(सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध भएर परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप साधक साधिकालगायत अन्य महानुभावहरूले आफ्ना जीवनमा पाउनुभएका विविध प्रकार र प्रकृतिका अनुभव/अनुभूतिहरू यस पत्रिकामा स्थायी स्तम्भअन्तर्गत प्रकाशित हुँदै आइरहेका छन् । सिद्धाश्रम शक्ति केन्द्रसँग जोडिएपछि यहाँहरूले सङ्गाल्ने सौभाग्य पाउनुभएको खण्डमा ती अनुभव/अनुभूतिहरूलाई पनि यस पत्रिकामा प्रकाशनार्थ उपलब्ध गराउन सक्नुहुनेछ, स्वीकृत भएमा मात्र छापिनेछ ।)

# सद्‌गुरुदेवको लीला यस्तो पनि...

म २०५९ चैत्र महिनादेखि आश्रममा जोडिएकी हुँ । पहिलोपटक आश्रम आउँदा मलाई असाध्यै रमाइलो लाग्यो । त्यसपछि मैले हवन कार्यक्रमहरूमा पनि भाग लिन थालेँ । बिहीबारको गुरु पूजनमा पनि भाग लिन छोडिन । घर-परिवारलाई पनि आश्रमको बारेमा बताएर आश्रम जान आग्रह गर्थें ।

२०६२ सालतिरको कुरा हो । त्यस सालको माघ महिनामा मेरी कान्छी छोरीको विवाहको कुरा आयो । त्यतिबेला हाम्रो आर्थिक स्थिति अत्यन्तै प्रतिकूल थियो । बिहे गर्नका लागि आवश्यक पैसाको अभावले गर्दा साह्रै तनाव र चिन्ता सृजना भयो । व्यापार, व्यवसायबाट आउने रकम पनि रोकिएको थियो । पैसा जम्मा हुन केही महिना लाग्ने थियो । टीकाटालो भइसकेको थियो । त्यतिबेला हामीसँग अलिकति पनि रकम साथमा थिएन । बिहेको दिन १५-१६ दिन मात्र बाँकी थियो । सरसापटी र ऋणका लागि गरिएका थुप्रै प्रयास, प्रयत्न पनि बिफल भए ।

एकदिन बिहान यस्तै ३:३० अथवा ४ बजेको हुँदो हो । म निद्राबाट व्युझिएँ । त्यतिबेला के गर्ने, कसो गर्ने भन्ने चिन्ताले साह्रै सताउन थाल्यो । सोचेर नै म ओछ्यानमा बसिरहेको थिएँ । अर्धनिद्रा जस्तोमा परमपूज्य सद्‌गुरुदेव श्री निखिलेश्वरानन्द महाराज आउनु भएर 'म मद्दत गर्छु' भन्नुभयो । म निद्राबाट व्यूझेँ । मैले गुरुदेवलाई प्रणाम गरेँ । मेरा आँखा रसाए । मलाई साह्रै खुशी लाग्यो । गुरुदेवले मद्दत गर्ने आश्वासन दिनु भएकोमा म ढुक्क भएँ । तर यस कुरालाई मैले कसैलाई पनि बताइन । यसको दुई दिनपछि मैले पहिले जोसँग पैसा मागेको थिएँ, उसैले फोन गरेर पैसा लिन आउनका लागि बोलाउनु भयो । त्यसपछि त सबैतिरबाट पैसा आउन थाल्यो । सम्भवै नभएको व्यक्तिबाट पनि पैसा आउन थालेपछि त आश्चर्य लाग्यो । छोरीको विवाह राम्रोसँग सम्पन्न भयो । यसप्रकार आर्थिक अभावजस्तो आपतकालीन अवस्थामा कृपा गरेर हाम्रो लाज राखिदिनु हुने परमपूज्य सद्‌गुरुदेवलाई कोटिकोटि साष्टाङ्ग दण्डवत् प्रणाम अर्पण गर्दछु ।

**–भवानी गौतम, काठमाडौँ ।**

## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

सूक्ष्म शरीरको यात्रा

# यक्षिणी लोकमा 


**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौँ। कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ। यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ। यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ।**

...तुरुन्तै 'रूप परिवर्तन क्षणात्' विद्या प्राप्त भयो। यसप्रकारको आदेश मैले नादको माध्यमबाट पाएको हुँ। मेरो त केवल आदेशको पालना गर्ने बानी परिसकेको थियो। आनन्द पनि ज्यादा यसमा नै आउँथ्यो। यसो भएमा गल्ती भएमा पनि कर्मदोष नहुने र समर्पण भावमा पनि वृद्धि हुने। एउटै रूपबाट एक ठाउँबाट अर्को ठाउँमा प्रकट हुने क्रममा तप शक्तिको मनग्ये जरुरत पर्ने हुँदोरहेछ। अत्यन्त टाढा प्रकट हुन लाग्दा तपस्याले भ्याएन भने सूक्ष्म शरीर बीच भाग (अन्तरिक्ष) मा गई अलपत्र भएर समय व्यतीत गर्नुपर्ने हुँदोरहेछ। उक्त स्थान अलपत्र पर्नेको लागि कष्टसाध्य हुने रहेछ। त्यहाँ कुनै पनि प्रकारको सुविधा हुँदो रहेनछ। त्यस्तो अवस्था नआओस् भन्नाको खातिर मलाई पूर्व जानकारी गराइएको कुरा स्वत: नै ज्ञात हुन आयो। रूप परिवर्तन त गर्ने तर कुन रूपमा परिवर्तन हुने भन्ने बारेमा मलाई केही पनि जानकारी आएन। शायद यहाँ पनि मेरो परीक्षा भइरहेको होला भन्ने मैले ठानेँ।

मैले ठम्याउन सकिनँ, म उपायको खोजीमा थिएँ। तुरुन्त निराकारमा परिणत भई सेतो (धूँवाजस्तो) प्रकाश शरीरमा रूपान्तरित हुने निर्णय गरेँ र सोही क्रमअनुसार अगाडि बढेँ। उक्त प्रकाश बिस्तारै माथि-माथि आयो। यस्तै-यस्तै स्वरूपमा विचरण गर्ने शक्ति धेरै हुने रहेछन्। विषयवस्तु चाहिँ सबै नै थाहा हुने रहेछ तर अभिव्यक्त गर्न सकिँदो रहेनछ। यसप्रकारको 'प्रकाशस्वरूप' जहाँ जहाँ छ, त्यहीँ नै मिलन हुनुपर्ने प्रावधान हुँदो रहेछ। यस्तो स्वरूपमा अन्य देवीदेवताहरू पनि आफ्नो रूप लुकाएर आकाश मार्गमा विचरण गर्दा रहेछन्। एउटै रंग भएता पनि मिलन हुनका लागि केही असुविधा पर्ने हुँदोरहेछ। अलि उत्तम शक्ति माथिल्लो तहबाट विचरण गर्दा रहेछन्। आफ्नो स्तर बराबर हुनेसँग मात्र मिलन हुन पाउने प्रावधान हुँदोरहेछ।

यस्ता प्रकारका दृश्यहरूले गर्दा गूढ ज्ञान जब ममा फुरेर आयो, मैले जताततै गुरु शक्ति (परमात्मा शक्ति) व्याप्त भएको अनुभव गर्न थालेँ। बादल (कुहिरो) पनि शक्तिपुञ्ज भएको कुरा मैले आभास गर्न थालेँ। क्षणभरमा बादल बन्ने त्यसपछि पानी बनेर पृथ्वीमा जाने, त्यसपछि बोट बिरुवामा प्रवेश गरी वनस्पति बन्ने आदि कुराहरूले गर्दा कुन आत्माको सम्बन्ध कहाँ छ के थाहा ? सजीव पनि निर्जीव बन्दो रहेछ। निर्जीव पनि सजीव बन्दो रहेछ। यस्तै-यस्तै बुझी नसक्नु अति रहस्यमयी गुरु लीला जति बुझ्न खोज्यो झन् गाह्रो लागिरहेको थियो मलाई। मनुष्य सत्तामा साधनामा लागेकाहरू एकान्तप्रेमी भएर एकोहोरो मूर्तिसँग वार्तालाप गर्न सक्ने अवस्थामा पुग्छन् र यो पनि शायद यही अवस्थाकै परिदृश्य वा परिछायाँ होला जस्तो लागिरहेछ मलाई।

जब म आकाश मार्गमा यस्तै प्रकारका ज्ञान हासिल गर्दै माथि-माथि जाँदै थिएँ, ठीक अलिक तल अत्यन्त रमणीय स्थल देखा पऱ्यो। जता हेरे पनि हराभरा थियो। अत्यन्त सजिएको बगैंचा, डाँडाकाँडा, कुनै ठाउँ चौताराजस्तो अत्यन्त मनमोहक दृश्य । मलाई यो ठाउँ मानव निर्मितजस्तो लाग्यो । मलाई यो ठाउँले साह्रै आकर्षित गऱ्यो। पूर्णरूपमा म सम्मोहित भएँ। ममा यो ठाउँ हेरूँ-हेरूँ लाग्ने आसक्तिले घर गर्न (कब्जा गर्न) थाल्यो । जब ममा यस्ता प्रकारका इच्छा अड्किन थाले, मसँग भएका अन्य 'प्रकाशस्वरूप' धेरै माथि पुगे। मचाहिँ न तल, न माथि हुन थालेँ। जब 'सेतो प्रकाशस्वरूप'भित्रबाट आसक्ति जन्मन्छ, त्यसपछि बीचको अवस्था आउँदो रहेछ । म त्यही अवस्थामा गुज्रिन थालेँ । त्यही रूपमा कतिञ्जेल बस्ने भन्ने ठानी मैले तुरुन्त त्यस अवस्था परिवर्तन गर्ने निधो गरी हरियो रंगको 'प्रकाशपुञ्ज'मा रूपान्तरित भएँ।

मलाई निराकारबाट सूक्ष्मसत्ताको साकार रूपमा प्रकट भएर त्यस ठाउँको अनुभव प्राप्त गर्न मन लाग्यो। जब म सूक्ष्म शरीरमा प्रकट भएँ, त्यसभन्दा अगाडिका कुरा मलाई सपनाजस्तो लाग्न थाल्यो। तर अहिले भएका सम्पूर्ण कुरालाई पत्याउन अनिवार्य थियो, विकल्प थिएन। पत्याएर पनि मलाई विश्वास गर्न गाह्रो भइरहेको थियो। म सबै कुरा अनुभव गर्न सक्थें, यो ठाउँ अति रमाइलो थियो । अत्यन्तै नौलो संसारको नौलो ठाउँ थियो यो। मलाई यो ठाउँको बारेमा पूर्ण ज्ञान हुन त बाँकी नै थियो। तर पनि म छिट्टै नै घुलमिल हुन सकेँ जस्तो लाग्यो । ममा एउटा कुरा खट्किरह्यो । यतिका सुन्दर बस्ती, रमणीय दृश्यमा कोही पनि थिएनन्। म असमञ्जसमा परेँ । त्यहाँबाट अर्को ठाउँमा जान हुने हो कि होइन, गल्ती पनि हुन सक्छ । त्यसपछि म सुमिरणमा (ध्यान पद्धतिको एउटा प्रक्रिया) गएँ । मलाई तुरुन्त ज्ञान भयो कि 'यहाँको प्रत्येक वातावरण र दृश्य क्षणिक छ, पलपलमा फेरिन्छ सोही अनुसार अगाडि बढ्नू।' त्यसपछि म ध्यान गरी त्यही ठाउँमा बसेँ।

अचम्मको कुरा के भने म ध्यानबाट ब्यूँझँदा अर्कै ठाउँमा थिएँ । नजिकै बगैंचा थियो । बगैंचामा विभिन्न थरी फूलहरू फुलिरहेका थिए। यहाँ चाहिँ कोही बसोबास गरेको जस्तो देखिन्थ्यो । मलाई साह्रै रमाइलो लागिरहेको थियो । आँखा डुलाउँदै गएँ, एउटा अलि ठूलो वृक्षमा गएर मेरो आँखा अड्किरह्यो । त्यहाँ हेर्दाहेर्दै म लठ्ठ भएछु। ब्यूँझँदा नजिकै कोही वार्तालाप गरिरहेको जस्तो आवाज आयो। तर हेर्दा केही पनि देखिँदैनथ्यो। कुनै ठाउँबाट मधुर ध्वनि र लय सुनिन्थ्यो तर कहाँबाट भन्ने चाहिँ यकिन गर्न सकिँदैनथ्यो। म बिल्कुल नौलो लोकमा आइपुगेछु जस्तो लाग्यो किनकि न त कुनै कुरा बुझ्दथेँ, न त यकिनसाथ कसैसँग भन्न सक्थेँ । कुनै बेला ८-१० जना आइमाई मान्छेहरू हाँसेको जस्तो आवाज कानमा सुन्नमा आउँथ्यो । म आनन्दित भएर पनि बेखुशी जस्तो थिएँ तर रमाइलोमा थिएँ।

मलाई तुरुन्त सूक्ष्म शरीर विलीन गराएर स्थिति बुझ्न मन लाग्यो । जब म त्यही प्रक्रियामा जानको लागि सोच्दै थिएँ, आकाश मार्गबाट मन्दिरजस्तो ज्वालास्वरूप तल आउँदै गरेको देखेँ । मैले उक्त 'ज्वालारूपी विमान' हेरिरहेँ । तल आउँदै थियो । केही माथि नै उक्त विमान रोकियो । त्यहाँबाट एकजना अति नै सिँगारिएकी अठार-उन्नाइस वर्षकी जस्तै आइमाई निस्किन्। अनायास नै मैले हात जोड्न पुगेछु। नजिकै आएपछि तिनले केही पनि बोलिनन्। सरासर आफ्नो बाटो लागिन्। अलि पर पुगेपछि स्वत: नै बिलाइन्। उक्त माथिको विमान पनि बिलायो । म झन् अचम्ममा परेँ। त्यहाँ सबै कुरा थियो तर बिल्कुल नौलो प्रकृतिको सत्ता थियो । मेरो मस्तकमा त्यही आइमाईको आकृति आइरहेको थियो । चाहे जोसुकै भएता पनि सद्भावना र सत्चिन्तनको साथमा ध्यान गऱ्यो भने अवश्य पनि केही प्राप्ति हुनेछ भन्ने ठानी तिनको आकृति र पहिरनको रंगमा ध्यान गरी बसेँ।

कति समय ध्यानमा बसेँ थाहा भएन । एकजना केटी मान्छेले बोलाएजस्तो आभास भयो तर पनि ध्यानमा नै एकाकार हुन मन लाग्यो । ध्यानबाट नै मैले तिनको साक्षात् दर्शन पाएँ। तिनी यस लोकको लागि अत्यन्त महत्त्वपूर्ण र उच्चकोटिकी यक्षिणी भएको ज्ञान मलाई भयो । यस्तै हुँदै थियो, मलाई आश्वासन आयो– 'तिम्रो मद्दतको लागि एकजना पठाइदिएकी छु, सोहीअनुसार अगाडि बढ्नू ।' जब यस्तो भइसकेको थियो, म ध्यानबाट बाहिर आउँदा नआउँदै त्यहाँ एकजना केटीमान्छे साइडमा उभिइरहेकी थिइन्। तर अचम्मको कुरा के भने त्यहाँ ज्यादा वार्तालाप (बाह्यरूपमा) केही पनि हुँदैनथ्यो, जे हुन्थ्यो सबै आन्तरिकरूपमा । त्यहाँ उभिनुको कारण सोधेँ। तिनले आन्तरिकरूपबाट नै मेरो मद्दतको लागि आएको कुरा बताइन् । तिनी जहाँ जान्थिन्, म पछि-पछि जानुपर्ने र तिनले भनेका कुराहरू विश्वास गर्दै अगाडि बढ्नुपर्ने कुरा अवगत गराइन्। त्यसपछि मैले वार्तालाप गर्दै अगाडि बढ्नको लागि स्वीकृति जनाएँ। तिनी अगाडि लागिन् र म पछि-पछि लागेँ। त्यसपछि तिनले आन्तरिकरूपमा व्याख्या गर्न थालिन्– 'म यक्षिणी हुँ। तिमी यस लोकमा आउनुको कारण तिमी स्वयंलाई थाहा छैन, तर म सबै कुरा आवश्यक परेमा...।'

म थाहा नै नपाई यक्षिणी लोकमा आइसकेछु । यहाँ अचम्म अचम्मका घटना घटित हुँदा रहेछन् । क्षणभरमा नै अवस्था परिवर्तन हुने रहेछ जसले गर्दा एकप्रकारको भ्रमजस्तो सृजना हुने रहेछ । एउटा अवस्था अर्को अवस्थामा रूपान्तरण हुँदा स्थान नै परिवर्तन भएको हो कि, अथवा के हो त्यसबारे छुट्टयाउन मुश्किल पर्ने रहेछ। यहाँका सम्पूर्ण अवस्था कतिबेला के हुन्छ ? पहिचान गर्न नै गाह्रो पर्ने रहेछ। प्रत्येक सामग्री स्वत: नै स्थापित हुने रहेछन् । यस लोकको सम्पूर्ण आँकलन त म गर्न सक्दिन किनकि म भरखरै प्रवेश भएको हुँ। तर पनि निचोडको रूपमा अर्थ्याउनु पर्दा विश्व ब्रह्माण्डका जे जति सजावट र शृंगार छन् ती सम्पूर्णको मूलस्रोत यही नै हो कि जस्तो लाग्यो।

मनुष्य सत्तामा जे जति प्रकारका शृंगार र तत्सम्बन्धी प्रसंग उठ्छन्, ती सबै विचारहरू यहीबाट संप्रेषित गरिने रहेछ । उनीहरूलाई स्वत: नै यक्षिणीबाट मद्दत मिलेको हुने रहेछ।

कुन सामग्रीले कसरी महत्त्व प्रदान गर्छ र त्यसको वास्तविक महत्त्व के हो ? कति समयसम्म आवश्यक पर्दछ, त्यसपछि त्यसलाई कसरी सदुपयोग गर्ने भन्ने बारेमा राम्ररी ज्ञान हासिल गर्ने मौका मिल्यो मलाई । यसैगरी यक्षिणीको बारेमा पनि ज्ञान हासिल गर्ने मौका मिल्यो । जति पनि प्रकारका सजावटहरू विशेष गरी सुन्दर कसरी बन्ने, सुन्दरी कसरी बन्ने, यी सम्पूर्ण ज्ञानको भण्डार नै यक्षिणी लोक रहेछ । मनुष्यलोक र यक्षिणीलोकमा पनि केही समानता हुने रहेछ । मनुष्य जातिमा जस्तै विभिन्न प्रकारका इच्छा, आकांक्षाहरू यक्षिणीहरूमा पनि छिपेर रहेको हुने रहेछ । जसरी मनुष्य जातिमा विभिन्न भौगोलिक धरातल, हावापानी मौसमको आधारमा विभिन्न रूप रंगका, क्षमताका, बानी व्यवहार र वर्णका मानिस भेटिन्छन्, त्यसैगरी त्यहाँ पनि यक्षिणीहरू हुने रहेछन् ।

यक्षिणी लोकभित्र विभिन्न उपलोकहरू विद्यमान (सृजना भएका) हुने रहेछन् । विभिन्न उपलोकमा केही भिन्न आचरण हुने रहेछ । एउटा अचम्मको कुरा चाहिँ के रहेछ भने यहाँ केटा (पुरुष जाति) चाहिँ ठम्याउन नै गाह्रो पऱ्यो मलाई । मेरो सहयोगको लागि आएकी यक्षिणीसँग मैले सोध्ने विचार गरेँ । प्रथमत: मैले नाम सोधेँ । तिनले नाम बताउनको लागि अलि इन्कार गरे जस्तो गरिन् । मैले भित्र-भित्रै गल्ती भएको भए क्षमा गरिदिन भनी अनुरोध गरेँ । तिनले पृथ्वीतटका युवतीले झैं मुस्कुराउने, लाज माने जस्तो आदि क्रिया गरिन् । म अत्यन्त संयमित थिएँ । यस बिरानो (थाहा नभएको) लोकमा म सचेत भएर अगाडि बढ्नुपर्छ भन्ने ठानी बार-बार गुरु स्मरण गरेँ । शायद यहाँ मेरो गुरु-परीक्षा भएको हुन सक्छ ।

एउटा घर (महल) जस्तो थियो, तर घरचाहिँ होइन, कस्तो-कस्तो यसलाई नाम दिन म अलि असमर्थ छु । यस लोकमा पाइने निवासस्थल अधिकांशत: यस्तै खालका छन् । पृथ्वीको जस्तै घरचाहिँ नहुने रहेछ । शृंगारचाहिँ अति थियो । प्रत्येक सामग्री, के के आवश्यक पर्दछ स्वत: नै त्यही ठाउँमा अवस्थित थिए । त्यस्तो ठाउँमा तिनले पुऱ्याइन् र आज हामी यहीं रहन्छौँ भनिन् । हुन त यहाँ दिन र रातको त्यति महत्त्व हुने रहेनछ तर पनि दिन र रातको आभास हुने रहेछ । त्यसै आधारमा भन्नुपर्दा शायद राति भएको होला । त्यसैले तिनले संकेत गरिन् । जब हामीले खानपानको लागि तयारी गरी खान बस्यौँ (खानाको लागि तयारी) तिनले म ड्रेस (पोशाक) परिवर्तन गरेर आउँछु भनी पल्लो कोठामा लागिन् । एकछिनपछि नै तिनी अत्यन्त सजिएकी रूपमा देखा परिन् । ती खानेकुराको रंग, बास्ना जस्तो थियो त्यही प्रकारको रंग, बास्ना तिनको शरीरबाट आउँथ्यो । मैले भन्न खोजेको, प्रत्येक पलमा परिवर्तन हुनुपर्ने यक्षिणीहरूको स्वभाव हुने रहेछ । यही कलाले तिनीहरूले अरुलाई आकर्षण गर्ने रहेछन् ।

वास्तवमा नराम्रो र कुरूप भन्ने अवस्था नै हुँदोरहेनछ । प्रत्येक वस्तुलाई सजाउन र रूपरंग मिलाउन जान्यो भने अत्यन्त राम्रो देखिने रहेछ । अप्सराहरूलाई सुन्दरी र आकर्षक बनाउनको लागि यक्षिणीहरूको ठूलो हात हुँदो रहेछ । मलाई तिनले खानेकुरा त दिइन् तर तिनी आफू भने अर्को कोठामा गइन् । खाना खाइसकेपछि यस्तो प्रकारको सन्तुष्टि प्राप्त भयो कि जसलाई सम्झँदा पनि त्यही क्षणमा भए जस्तो लाग्दछ । खाना खाएपछि केही समय हामी वार्तामा नै निमग्न भयौँ । त्यसपछि आराम गर्नको लागि मलाई तिनले नजिकको पलंगजस्तो तर त्यो पलंग चाहिँ होइन, अनुरोध गरिन् । तर तिनी आफू चाहिँ अन्तै कतै गइन् । तिनी कहाँ गइन् मलाई थाहा भएन । जब अर्को दिनको आभास भयो मभन्दा पहिले तिनी नै आइसकेकी थिइन् । आजको हाम्रो यात्रा कुनै नयाँ ठाउँमा जाने थियो । त्यहाँको वस्तुस्थितिको बारेमा जान्न नपाउँदै त्यहाँ जानको लागि तयारी हुनुपर्ने भयो । तिनको आजको रूप, रंग अलि फरक थियो । आँखा र उचाइले मात्र पहिचान गर्न सकिन्थ्यो । हाम्रो अब भेटघाट कार्यक्रम छ हामी त्यहाँ जाँदैछौँ भनी तिनले जानकारी गराइन् ।

जब हामी उक्त नयाँ ठाउँमा पुग्यौँ, त्यहाँ केटीहरू मात्र थिए । धेरै जनाको बीचमा म एक्लो हुँदा स्वत: नै मलाई लाजजस्तो लागेर आयो । खुलेर बोल्न सकिनँ । आफ्नो परिचय दिन सकिनँ । म त्यहाँसम्म कसरी आइपुगेँ त्यो जानकारी अरुलाई भएको रहेनछ । त्यसकारण तिनीहरूलाई (यक्षिणीहरूलाई) अचम्म लागिरहेको रहेछ । ती यक्षिणीहरूलाई पनि जिज्ञासा हुने रहेछ, थाहा पाउन मनलाग्ने हुँदो रहेछ । वास्तवमा मैले नाफा नगरी बोल्नुपर्दा र सत्य कुरा बोल्नुपर्दा ती यक्षिणीहरूको रूप, रंग, आँखाको हेराइ लगायत सम्पूर्ण कुरामा मोहिनी शक्ति व्याप्त भएको थियो । स्वत: नै मनपर्ने, आसक्तिले घर गर्ने (सम्पूर्ण कुरा बिर्सेर युगौंसम्म बस्न मनलाग्ने) आदि कुरा हुने गर्थ्यो । तिनीहरूले एक-एक गरेर आफ्नो परिचय दिदैँ गए । परिचयको क्रममा एकजना मलाई अति मन पऱ्यो । तर मैले मेरो आन्तरिक भावनालाई चाहिँ त्यति दूषित हुन दिइनँ ।

हामी बीचमा केही समय आँखा हेराहेरको अवस्था आयो । तिनले जबर्जस्ती रूपमा मभित्र कब्जा जमाइन् । अन्तमा, मैले मेरो परिचय दिने क्रममा प्रथमत: गुरुको नाम लिएँ । त्यसपछि अगाडिको अवस्थादेखि क्रमश: (मनुष्य, सूक्ष्म, नाग...आदि) दिदैँ गएँ । तिनीहरू सशंकित अवस्थामा भएको मैले पाएँ । साथै प्रत्येकले नजिक हुन पाए हुन्थ्यो भन्ने भाव प्रकट गरेको कुरा मैले स्वत: नै थाहा पाएँ । वास्तवमा यक्षिणीहरू कोही पनि बूढा हुँदा रहेनछन् । पृथ्वीतटका योगी, सिद्ध साधक फेला परेको खण्डमा आफ्नो बनाउन खोज्दा रहेछन् । आफ्नो बनाउनको लागि तिनीहरूले जस्तोसुकै प्रकारको त्याग गर्न परे पनि पछि हट्ने रहेनछन् ।

तिनीहरू आवश्यक परेमा सशरीर पृथ्वीमा युवतीको रूपमा एउटा नाम र भेषमा प्रकट भएर कसैसँग आफ्नो इच्छा, चाहना पूरा गरी मनुष्य जीवनको भोग मेटाएर अन्तमा आफ्नो लोकमा फर्कंदा रहेछन् । यसो गर्ने क्रममा एउटै समयमा यिनीहरू फरक-फरक ठाउँमा देखा पर्न सक्ने हुँदा रहेछन् । देवी, देवता वा सो सरह मनुष्यलाई मद्दत गर्न सक्ने हुँदा रहेछन् तर त्यसो गरे बापत केही उनीहरूको पनि होस् भन्ने चाहना तिनीहरूको हुने रहेछ । परिचय त लिने दिने क्रम भयो तर मैले ती केटी (यक्षिणी) को नाम भुसुक्क बिर्सेछु । अनुहार र आँखा चाहिँ याद थियो । मलाई पहिले जसले मद्दत गरेकी... क्रमश:

# मासिक हवन कार्यक्रम

गत ज्येष्ठ ६ गते सोमबार पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा श्री शिवगोरक्ष हवन सम्पन्न भयो । उक्त हवन बिहान ८ देखि ९ बजेसम्म संचालन भएको थियो ।

त्यस्तै, ज्येष्ठ ७ गते मङ्गलबार ललितपुरको लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन सम्पन्न भयो । उक्त हवन बिहान ७-८ बजेसम्म चलेको थियो । हवनमा सहभागी हुनेहरूले उक्त दिन कुकुरलाई खानेकुरा दिनुपर्ने र पिट्न नहुने नियम छ ।

त्यसैगरी, ज्येष्ठ १ गते बुधबार बिहान ८-९ बजेसम्म ललितपुरको लगनखेलस्थित महालक्ष्मी मन्दिर परिसरमा तान्त्रोक्त महालक्ष्मी हवन सम्पन्न भयो । उक्त हवनमा सहभागीहरूले दिनभरि रिसाउन नपाउने नियम छ ।

गत ज्येष्ठ २ गते बिहीबार लगनखेलको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवन बिहान ८–९ सम्म सञ्चालन भएको थियो ।

# आध्यात्मिक सह-नेतृत्वकर्ता तहको तालिम

सिद्धाश्रम शक्ति केन्द्रले गत ज्येष्ठ २० र २१ गते आध्यात्मिक सहनेतृत्वकर्ताहरूको बाह्रौं तालिम सम्पन्न गऱ्यो । बिहान १० बजेदेखि बेलुकी ५:३० सम्म संचालित उक्त तालिम काठमाडौँको बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा सम्पन्न भएको थियो ।

कार्यक्रममा कार्यकर्ताहरूलाई 'लोकतन्त्र, स्वतन्त्र र गोनि तन्त्र', 'राज्यसत्ता, स्थूलसत्ता र सूक्ष्मसत्ता', 'अध्यात्मवाद, विज्ञानवाद र सूक्ष्मवाद'जस्ता विविध विषयमा प्रशिक्षण प्रदान गरिएको थियो । अधिराज्यबाट ६२ जना कार्यकर्ताहरू सहभागी भएको उक्त तालिममा काठमाडौँ, ललितपुर, भक्तपुर, सिन्धुली, गोरखा, कास्की, चितवन, सुर्खेत, सर्लाही जिल्लाहरूबाट सहभागिता रहेको थियो ।

कार्यक्रमको पहिलो दिनमा गुरु पादुकाको पूजन गर्ने सौभाग्य साधिकाहरू गीता कँडेल, शारदा के.सी., लीलादेवी सिम्खडा र शारदा पुडासैनीले पाउनु भएको थियो भने साधकहरू असीम शर्मा, रञ्जनराज पोखरेल, सृष्टि सुवेदी र उत्तम पाठकले दोस्रो दिनको दिव्य पादुका पूजनमा भाग लिने सौभाग्य पाउनु भएको थियो ।

कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङ्गमा मनोहर अधिकारी, फौदबहादुर सुनुवार, सुमन आचार्य, मिना जोशी, चन्द्रबहादुर मल्ल, शिव अधिकारी, बालकृष्ण ढकाल, ज्ञानु अर्याल, शालिग्राम सिलवाल, शकुन्तला पहारी विकसित भएर आध्यात्मिक नेतृत्वकर्ता तहमा पदोन्नत हुनु भएको थियो ।

# दिव्य गुरु महोत्सव

सिद्धाश्रम शक्ति केन्द्रले यसपटक दिव्य गुरु महोत्सवलाई दुई ठाउँमा मनाउने सौभाग्य पायो । गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम र गोरखामा रोट अर्पण कार्यक्रमको बीचमा विविध कार्यक्रमका बीच गत ज्येष्ठ ८ गते बुधबार दिव्य गुरु महोत्सवलाई मनाइएको थियो ।

बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा बिहान १०:१५ मा स्तुति-वन्दना, निखिल स्तवनको सस्वर पाठसँगै महोत्सवलाई अगाडि बढाइएको थियो । महोत्सवमा गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन र नृत्यका कार्यक्रम सम्पन्न भएका थिए । उक्त अवसरमा साधिकात्रय मधु रायमाझी, ललिता के.सी. र शान्ता वस्नेतले दिव्य पादुका पूजन गर्ने सौभाग्य पाउनु भएको थियो ।

महोत्सवको दोस्रो चरण भने भजन-कीर्तन कार्यक्रमका बीच सम्पन्न भएको थियो ।

उक्त महोत्सवमा गुरुसेवा दल नं. १२ का सदस्य साधक जयलाल गुरुङले उपस्थित सबैलाई संस्थाको तर्फबाट स्वागत गर्नुभएको थियो । उपत्यका बन्दका बावजूद थुप्रै सहभागिताका बीच बसुन्धरामा सम्पन्न महोत्सवमा सम्पर्क कार्यालय भक्तपुरका साधक साधिकाहरूले भजन-कीर्तनमार्फत् सहभागीहरूलाई मनोरञ्जनात्मक आनन्द प्रदान गर्नुभएको थियो ।

त्यस्तै, गोरखामा सम्पन्न दिव्य गुरु महोत्सव ठीक १०:१५ बजे स्तुति-वन्दना, स्तवन पाठबाट शुरु भई गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन, नृत्य र गुरुसेवा दलको पोशाक वितरण आदि कार्यक्रमहरू बीच सम्पन्न भएका थिए । उक्त कार्यक्रममा गुरुसेवा दलका नं ६ सदस्य साधक सुविन अर्यालले स्वागत मन्तव्य राख्नु भएको थियो ।

दुवै स्थानमा सम्पन्न महोत्सव दिउँसो ३:३० सम्म चलेको थियो ।

## सम्पर्क कार्यालय गतिविधि

सिद्धाश्रम शक्ति केन्द्र भक्तपुर स.का. र आरती संचालन केन्द्र, ठिमीको व्यवस्थापनमा विस्केट जात्राको अवसर पारेर गत वैशाख १ गते श्री सिद्धिकाली मन्दिर र २ गते दुई पोखरीस्थित धर्मशालामा प्राथमिक उपचार तथा जनसम्पर्क कार्यक्रम सम्पन्न भयो। उक्त दुवै दिन जात्रामा उपस्थित भक्तजनहरूलाई जनसम्पर्क, पानी वितरण एवं जात्रामा घाइते हुनेहरूलाई प्राथमिक उपचारसहितको कार्यक्रम सम्पन्न भएको थियो ।

सिद्धाश्रम शक्ति केन्द्र सौरापानी सम्पर्क कार्यालयले वैशाख २ गते सोमबार बिहान श्री शिव गोरक्ष हवन ३० जना साधक साधिकाहरूको सहभागितामा सम्पन्न गऱ्यो ।

त्यस्तै, वैशाख ३ गते मंगलबार भगवान् बाघ भैरवको हवन सम्पन्न भएको थियो । ४१ जना साधक साधिकाहरूको सहभागिता रहेको उक्त हवनमा बाघ भैरव चौतारा पुनर्निर्माणको शुभारम्भ सौरपानी गा.वि.स. वडा नं. २ अर्चले निवासी श्री देवीप्रसाद पनेरुले गर्नुभएको थियो । त्यस्तै दिव्य गुरु महोत्सवको पावन अवसरमा पनि विशेष पूजन गरिएको थियो । उक्त अवसरमा साधक साधिकाहरूले भवन निर्माणका लागि तयार गरिएको काठ बोकेर गुरु कार्य गर्नुभएको थियो भने साधकहरू रमेश कोइराला, निमप्रसाद ढकाल र पदमप्रसाद अमगाईंबाट अनौपचारिक प्रशिक्षण तथा जनसम्पर्क कार्यक्रम सम्पन्न भएको थियो । उक्त अवसरमा साँझ दीपावली पनि गरिएको थियो ।

## सम्पर्क कार्यालय लेखनाथ आफ्नै भवनमा सऱ्यो

परमपूज्य सद्‌गुरुदेवहरूको असीम अनुकम्पा, कृपा एवं आशीर्वादस्वरूप कास्की जिल्ला लेखनाथ नगरपालिकाको बडहरेमा स्थानीय साधक साधिका एवं भक्तजनको सक्रियतामा सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय लेखनाथ कास्कीको भवन निर्माण गरी २०६५ साल वैशाख २६ गते बिहीबारदेखि सद्‌गुरुदेवहरूको दिव्य आरतीबाट सम्पर्क कार्यालय स्थानान्तरण गरियो । उक्त दिन भजनकीर्तन तथा ऱ्याली पनि आयोजना गरिएको थियो ।

## पोखरामा विन्ध्यवासिनी हवनको शुभारम्भ

परमपूज्य सद्‌गुरुदेवहरूको असीम अनुकम्पा, कृपा एवं आशीर्वादस्वरूप कास्की जिल्लामा पनि मासिकरूपमा माता विन्ध्यवासिनीको तान्त्रोक्त हवन कार्यक्रम शुभारम्भ भयो । हरेक महिनाको पहिलो बुधबार सम्पन्न हुने उक्त हवनको शुभारम्भ गत ज्येष्ठ १ गते बुधबार भएको थियो । माता विन्ध्यवासिनीको प्रसिद्ध मन्दिरको प्रांगणमा सम्पन्न भएको उक्त हवन बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म चलेको थियो । सो दिन ३०० जना साधक साधिका तथा भक्तजनले सामूहिकरूपमा हवनमा सहभागिता जनाउनुभएको थियो ।

## चौथो भजनमाला क्यासेट सार्वजनिक

परमपूज्य सद्‌गुरुदेवहरूको असीम अनुकम्पा, कृपा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रद्वारा आयोजित पाँचौ रोट महोत्सव २०६५ का अवसर मा सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय रामघाट पोखराको दोस्रो तथा सि.श.के.को चौथो प्रस्तुति **'प्रेमले भन्नोस्–जयगुरुदेव'** नामक अडियो क्यासेट गोरख गुफामा गुरुचरणार्पणपश्चात् सोही दिन साँझको कार्यकर्ता भेलामा सार्वजनिक गरियो ।

योग विशेष

# पृथ्वी मुद्रा र वायु मुद्रा

**निर्विषोऽपि भवेत् क्षिप्रं यो जन्तुर्विषमूर्छितः**

**चत्वारिंशत् समाख्याता मुद्रा श्रेष्ठा महाधिकाः**

मुद्राको प्रदर्शन र अभ्यासबाट मूर्छित व्यक्तिले समेत लाभ प्राप्त गर्दछ । रोग र मृत्युबाट पनि व्यक्तिले मोक्ष प्राप्त गर्दै मानव जीवनको सर्वोच्च उपलब्धि हासिल गर्दछ ।

सूक्ष्म शक्तिहरूलाई सही बाटोबाट प्रवाहित गराउनको लागि शरीरलाई विभिन्न अवस्थामा स्थापित गराई राख्ने प्रक्रिया नै मुद्रा हो । मुद्राले शरीरभित्र रहेका शक्तिपुञ्जलाई क्रियाशील बनाई सम्बन्धित च्यानलहरूमा सञ्चरित गराउने कार्य गर्दछ जसले गर्दा पञ्चभौतिक तत्त्वबाट निर्मित हाम्रो देहको पञ्चतत्त्व सन्तुलित बन्न जान्छ। कुनै कुनै मुद्राहरू आसन र प्राणायामसँगै अभ्यास गरिन्छ भने कुनै मुद्राहरू अलग-अलग ढङ्गले गर्नुपर्दछ । विभिन्न मुद्राहरूको सम्बन्ध कुण्डलिनी चक्र र ती चक्रहरूलाई जागरुक गराउने किसिमका हुने भएकोले ध्यानका विभिन्न चरणहरूको अभ्यास गर्दा अलग-अलग प्रकारका मुद्राहरूको प्रयोग गरिन्छ । त्यस्ता ध्यानमा गरिने मुद्राहरूमा मुद्रा र ध्यानित शक्तिप्रतिको ध्यान महत्त्वपूर्ण हुने गर्दछ। ध्यानको माध्यमबाट प्राप्त भएका ती दिव्य शक्तिहरूलाई हाम्रो शरीरभित्र च्यानलाइज गर्न ती मुद्राहरूले प्रमुख भूमिका खेल्छन् र व्यक्तिले पूर्ण लाभ प्राप्त गर्न सक्दछ । त्यसैले, मुद्राहरूको प्रयोग भएका ध्यानहरूबाट छिटोभन्दा छिटो लाभ प्राप्त हुन्छ ।

ध्यानका विभिन्न चरणहरूलाई जनसमक्ष ल्याएर सिद्धाश्रम शक्ति केन्द्रले ध्यानका चरणअनुसार ती दिव्य शक्तिहरूलाई हामीभित्र स्थापित गराउन र हामीभित्रका सुषुप्त एवं निस्क्रिय अवस्थामा रहेका शक्तिहरूलाई सक्रिय बनाउनको लागि अद्वितीय एवं दुर्लभ मानिने मुद्राहरूलाई आत्मसात् गर्दै र गराउँदै अगाडि बढाइरहेको छ । समय-समयमा त्यस्ता अद्वितीय प्रकारका, कहिल्यै नदेखेका र नसुनेका मुद्रासहितको ध्यान कार्यक्रम पनि सम्पन्न हुँदै आइरहेका छन् । ध्यान एवं साधनामा मुद्राको अत्यन्तै महत्त्वपूर्ण भूमिका रहने भएकोले त्यस्ता विशेष प्रविधियुक्त ध्यान एवं साधनाको नियमित अभ्यास गर्नु आवश्यक देखिन्छ । देख्दा सामान्य लाग्ने ती ध्यानको दैनिक अभ्यासबाट अतुलनीय लाभ प्राप्त हुन्छ र हाम्रो जीवनमा आमूल परिवर्तन आउन सक्दछ । सामान्यभित्र नै असामान्य चीजहरू लुकेर रहेका हुन्छन् । केवल अन्तस्करणदेखिको त्यसप्रति श्रद्धा, भक्ति र विश्वाससहितको दैनिक अभ्यास हुनुपर्दछ ।

पृथ्वी मुद्रा र वायु मुद्राहरू पृथ्वी तत्त्व र वायु तत्त्वसँग सम्बन्धित रहेका छन् । पृथ्वी तत्त्वको प्रतिनिधित्व हाम्रो हातको साहिँली औँलाले गर्दछ भने वायु तत्त्वको प्रतिनिधित्व हातको चोरी औँलाले गर्दछ। यी मुद्राहरूको अभ्यासबाट शरीरभित्र र बाहिर रहेका तत्त्वबीचको असन्तुलनलाई सन्तुलित गराई ती तत्त्वहरूबाट उत्पन्न हुने शारीरिक र मानसिक समस्या एवं रोगलाई निवारण गराउने कार्य हुन्छ । यी दुवै मुद्राहरूको अभ्यासका विधिलाई तल प्रस्तुत गरिएको छ ।

**पृथ्वी मुद्रा :**

- मुद्राहरू विभिन्न भए पनि बस्दा सजिलोसँग ढाडलाई सिधा गरी पद्मासन वा सुखासनमा बस्ने ।
- मुद्राको अभ्यासमा हातका औँलाहरू छोइएको स्थान र त्यो दिव्यशक्तिको स्मरणमा आफूलाई केन्द्रित गर्दै दुवै हातलाई घुँडामा राख्ने ।
- साहिँली औँलाको टुप्पो र बूढी औँलाको टुप्पो एक आपसमा मिलाउने ।
- अन्य औँलाहरूलाई सीधा गरी राख्ने ।
- यसरी दुवै हातका औँलाहरू मिलाई अभ्यास गर्न सकिन्छ ।

**वायु मुद्रा :**

वायु मुद्राको अभ्यास गर्दा सम्पूर्ण अवस्था पृथ्वी मुद्राको जस्तै गरी बसिसकेपछि बूढी औँलाको फेदमा चोरी औँलाको टुप्पो राखी बूढी औँला चोरी औँलाको लगभग नङमाथि राख्ने ।

चित्रमा देखाए झैँ गरी वायु मुद्राको एवं पृथ्वी मुद्राको अभ्यास गर्ने ।

यसरी आफ्नो अनुकूलताअनुसार, आफ्नो समस्याअनुसार यी मुद्राहरूको अभ्यास गर्न सकिन्छ। चालीस-पैँतालीस मिनेटसम्म ध्यान गर्दा मुद्राको प्रयोग गर्न सकिन्छ । तब यी मुद्राहरू एवं ध्यान साधनाबाट धेरै लाभ प्राप्त गर्न सकिन्छ । यस पत्रिकामा केही अङ्कदेखि नै पञ्चतत्त्वलाई सन्तुलित बनाउने हस्तमुद्राहरूको बारेमा जानकारी दिइँदै आइरहेका थियौँ । यी मुद्राको प्रमुख उद्देश्य हामीभित्र रहेका पञ्चतत्त्वलाई सन्तुलनमा राखी निरोगी बन्नु हो । सामान्य ध्यान एवं साधना गर्दा यी मुद्राहरूलाई अपनाउन सकिन्छ भने विशेष ध्यानमा प्रयोग हुने मुद्राहरूलाई त्यही पद्धतिअनुसार अभ्यास गर्नुपर्दछ ।

**फाइदाहरू :**

पृथ्वी मुद्राबाट शरीरमा रहेका कमजोरी, शिथिलता र दुर्बलता हट्दछ। यसले शरीरमा शक्ति, स्फूर्ति, तेज बढाउँछ भने सात्विक गुणको विकास गराई सकारात्मक सोचाइको वृद्धि गरी नकारात्मक विचारलाई हटाउँदछ । साथै, मोटोपनको लागि पनि लाभदायक मानिन्छ ।

वायु मुद्राको सम्बन्ध वायु तत्त्वसँग भएकोले वायु-विकारसम्बन्धी समस्या जस्तैः पेटमा ग्याँस उत्पन्न भई पेट फुल्ने, डकार आदि आउने, हाडका जोर्नीहरूमा दुख्ने, सुन्निने समस्या, वायुको कारण मेरुदण्ड एवं कम्मर दुख्ने समस्या आदिमा फाइदा पुर्‍याउँछ । जय गुरुदेव !

# परमपूज्य सद्‌गुरुदेवको
# अवतरण यात्रा

## गुरुदेवसँगको पहिलो भेट

त्यो लोक कस्तो छ भन्ने सम्बन्धमा स्पष्ट छ–

**भूभुर्वः स्वरिमे लोका श्चन्द्रसूर्याग्नि देवताः ॥ प्रतिष्ठितः सदा यत्र तत्परं ज्योतिरोमिति ॥**
**त्रयः कालास्त्रयो लोका, स्त्रयोवेदास्त्रयोग्नयः । त्रयः स्वराः स्थिताः यत्र, तत्परं ज्योतिरोमिति ॥**
**सत्वं रजस्तमश्चैव, ब्रह्म विष्णु महेश्वराः । सर्वे देवाः स्थिताः यत्र, तत्परं ज्योतिरोमित ॥**
**कृतिरिच्छा तथा ज्ञानं, ब्राह्मी रौद्री च वैष्णवी । त्रिधा शक्तिः स्थता यत्र, तत्परं ज्योतिरोमिति ॥**
**शुचिर्वाप्यशुचिर्वापि, यो जपेत्प्रणवं सदा । न स लिप्यति पापेन, पद्मपत्रमिवाम्भसा ॥**
**पद्मासनं समारुहा, समकायशिरोधरः नासाग्रदृष्टिरेकाकी, जपेदोंकारमव्ययम् ॥**
**देहेऽस्मिन्वर्तते मेरुः, सप्तद्वीप समन्वितः । सरितः सागराः शैलाः क्षेत्राणि क्षेत्रपालकाः ॥**
**ऋषयो मुनयः सर्वे नक्षत्राणि ग्रहस्तथा । पुण्यतीर्थानि पीठानि, वर्लन्ते पीठदेवताः ॥**
**सृष्टिसंहारकर्तारौ, भ्मन्तौ शशिभास्करौ । नभो वायुश्च दह्निश्च, जलं पृथ्वी तथैव च ॥**
**जानाति या सर्वमिदं, स योगी नात्र संशयः । नाभिजानाति शीतोष्णं, न दुःखं न सुखं तथा ॥**
**न मानं नापमानं च योगी युक्तःसमाधिना । अभेद्यः सर्वशस्त्राणामवध्यः सर्वदेहिनाम् ॥**
**अग्राह्मो मन्त्रसंधानां, योगी युक्तःसमाधिना । दृष्टि स्थिरो यस्य विनापि दृश्याद् ॥**
**वायुः स्थिरो यस्य विना प्रयत्नात् । मनः स्थिरं यस्य विनावलम्बात ॥**
**स एव योगी स गुरुः स सेव्यः । भुवोर्मध्ये शिवस्थानं मनस्तत्र विलीयते ।**
**ज्ञातव्यं तत्पदं तूर्य, तत्र कालो न वियते ॥**

भूभुर्वः स्वः तीनै लोक, जसको स्वामी चन्द्रमा, सूर्य एवं अग्नि देवता हुनुहुन्छ र जहाँ यी प्रतिष्ठित हुन्छन् त्यसमाथि ज्योतिरूप ओंकारको पावन स्थान छ । तीनै काल, तीनै वेद, तीनै लोक, तीनै अग्निहरू र तीनै स्वर जहाँ स्थित छ, त्यसमाथि पनि ओंकार ज्योतिको स्थान छ । सत, रज, तम, ब्रह्मा, विष्णु, महेश र समस्त देवता जहाँ स्थित छन्, त्यसमाथि पनि ओंकार ज्योति देखिन्छ । कृति, इच्छा र ज्ञान, ब्राह्मी, रौद्री र वैष्णवी यी त्रिधाशक्तिहरू जहाँ अवस्थित छन्, त्यसमाथि यो शक्ति देखिन्छ । ओंकार सिद्धि नै प्रथम सिद्धि हो जसद्वारा अगाडि बढ्न सकिन्छ । पद्मासनमा बसेर, शरीर, ग्रीवा र शिरलाई सीधा राखेर नासिकाग्रमा दृष्टि स्थापित गरेर जप गर्नुपर्दछ । यस शरीरमा मेरु छ, सप्त देवताहरूको सप्त मेरु यसै शरीरमा स्थित छ । समस्त सरिता, सागर पर्वत र क्षेत्र यसै शरीरमा छन् । यसैमा समस्त देव, ऋषि, मुनि, नक्षत्र, ग्रह, तीर्थ स्थान, पीठ एवं पीठदेव छन् । सृष्टिलाई उत्पन्न, पालन एवं संहार गर्ने पनि यसै शरीरमा छ– जसले यी सबैलाई जान्दछ, त्यही वास्तवमा योगी कहलिन सक्दछ । न त योगीले शीतले जान्दछ, न ऊष्णलाई, न त्यो सुखलाई जान्दछ, न दुःखलाई । मानापमानबाट त्यो परै रहन्छ, त्यो सबै शास्त्रबाट अभेद्य छ, त्यो मनुष्यबाट अवद्य छ, कुनै मंत्र त्यसलाई ग्रस्त गर्न सक्दैन । त्यसको दृष्टिबिना कुनै दृष्टि स्थिर छ, बिनाप्रयत्न जसको वायु स्थिर छ । बिनाअवलम्बन जसको मन स्थिर छ । त्यो योगी हो, त्यही गुरु कहलिन योग्य छ । दुवै आँखीभौंको मध्य शिववास छ, यहीं मनको विलय हुन्छ, त्यस स्थानलाई जान्नु पूर्णता हो । क्रमशः

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**ध्यानंशृणु महादेवि !**
**सर्वानन्द प्रदायकम्**
**सर्वसौख्यकरं नित्यं**
**भुक्तिमुक्ति विधायकम् ॥१०७॥**

भावार्थ : गुरुत्व सदैव नै आनन्द, सुख, भुक्ति तथा मुक्तिप्रदायक मानिएको छ । गुरुको आराधनाले आध्यात्मिक पक्षको मात्र उन्नति हुँदैन, बरु भौतिक पक्षको पनि उन्नति हुन्छ । गुरुत्वको आराधनाले मात्र यी दुवै पक्षहरूमा समानरूपले पूर्णता प्राप्त हुन सक्छ । गुरु त यस धर्तीमा साक्षात् भगवान् हुनुहुन्छ । अन्य देवताहरूलाई हेर्न दिव्यदृष्टि गुरुले प्रदान गर्न सक्नुहुन्छ ।

**श्रीमत्परब्रह्म गुरुं स्मरामि,**
**श्रीमत्परब्रह्म गुरुं वदामि ।**
**श्रीमत्मरब्रह्म गुरुं नमामि**
**श्रीमत्परब्रह्म गुरुं भजामि ॥१०८॥**

भावार्थ : परब्रह्म स्वरूप गुरुलाई म स्मरण गर्दछु, उहाँकै नामको सङ्कीर्तन गर्दछु । श्री परब्रह्म गुरुलाई म भक्तिभावका साथ नमस्कार गर्दछु र उहाँकै दिव्य मूर्तिको सदा सर्वदा ध्यान गर्दछु । गुरु देवाधिदेव हुनुहुन्छ, उहाँ बाहेक अरु कुनै देवता हुनै सक्दैन । इष्टका रूपमा उहाँ सदैव मनन-चिन्तनयोग्य हुनुहुन्छ । शिष्यले प्रतिपल आफ्नो तन, मन, प्राण, रोम-रोमले सदैव गुरुकै नामको स्मरण गरोस् भन्ने चिन्तन गर्नुपर्छ ।

**ब्रह्मानन्दं परमसुखदं केवलं ज्ञानमूर्तिं**
**द्वंद्वातीतं गगनसदृशं तत्वमस्यादिलक्ष्यम् ।**
**एकं नित्यं विमलमचलं सर्वधीसाक्षि भूतं**
**भावातीतं त्रिगुणरहितं सद्गुरुं तं नमामि ॥१०९॥**

भावार्थ : ब्रह्मानन्दमा निमग्न, शिष्यहरूलाई आनन्दित गर्नुहुने, ज्ञानस्वरूप, सुख-दुःख आदि द्वंद्व धर्महरूबाट पर रहनुभएका, आकाशसमान् निर्मल, तत्त्वमसि आदि वाक्यहरूका लक्ष्यभूत, अद्वितीय, नित्य, परम पवित्र, सदैव स्थिर, सबै साधकहरूका मनका वृत्तिलाई जान्नुहुने, सत, रज, तम आदि गुणहरूबाट रहित, परम पावन चिन्मय स्वरूप, आनन्द-धन, नित्य, निर्मल, सच्चिदानन्द स्वरूप समस्त दिव्य भावहरूबाट युक्त गुरुदेवलाई म श्रद्धायुक्त हृदयबाट नमन गर्दछु ।

**नित्यं शुद्धं निराभासं**
**निराकारं निरंजनम् ।**
**नित्यबोधं चिदानन्दं**
**गुरुं ब्रह्म नमाम्यहम् ॥११०॥**

भावार्थ : गुरु तत्त्व जन्म-मृत्युभन्दा पर, विशुद्ध, भावरहित एवं शाश्वत् छ । अज्ञानजनित मायारहित हुनाले गुरु त्रिगुणातीत स्वरूप हुनुहुन्छ । सत्, रज्, तम् आदि गुणहरूबाट टाढा हुनाले पवित्र हुनुहुन्छ, विकारजनरहित, दोषरहित हुनाले निरंजनस्वरूप हुनुहुन्छ, सम्पूर्ण जीवहरूका हृदयमा चैतन्यरूपले विराजमान हुनु भएकोले चैतन्यस्वरूप हुनुहुन्छ । यसप्रकार अनन्त गुणहरूले युक्त पूज्य गुरुदेवलाई म नमस्कार गर्दछु ।

आत्मीय पाठकवर्ग, परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य स्वरूपको बारेमा जान्नु र बुझ्नु हामी मनुष्यको वशको कुरा होइन। तैपनि यस स्तम्भमार्फत केही मात्रामा श्री निखिलेश्वर शतकम्लाई क्रमशः प्रकाशित गर्दै लगिएको छ। यस प्रयासबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ भन्ने कुरामा हामी विश्वस्त छौं।

।९३॥

**यस्यार्द्रदृष्टिवशतो मनुजाः समृद्धिं ,**
**कोपाद् विनाशमति यान्ति तथैव शीघ्रम् ।**
**कामादि-दोषदलनं द्रुतमोक्षदं तं;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

हे गुरुदेव ! अनन्त दोषयुक्त भएर पनि म हजूरको शरण परेको छु। तसर्थ, अब म हजूरकै हुँ। जब हजूरले ममाथि कृपा गरेर आफूकहाँ बोलाएर चरणरति प्रदान गर्नुभएको छ भने अब यस जीवनको बागडोर छाडेर मलाई यताउता अलमलिन नदिनुहोला। दोषी भएर पनि महात्मा तुलसीदासका यी शब्दहरूका साथ बारम्बार म हजूरसँग यही विनय तथा याचना गर्दछु–

**कुटिल करम लै जाँइ जहाँ जँह मोहि अपनी बरियाई ।**
**तँह तँह जनि छिन छोह छाँडियो कमठ अण्उ की नाईँ ॥**

जसका कृपादृष्टिका निक्षेपले मात्र मानिस समृद्धि प्राप्त गर्छन् र त्यस्तै प्रकारले क्रोधपूर्ण दृष्टि तुरुन्तै विनाश पनि हुन जान्छ, जसले काम, क्रोधादि चित्तवर्ती प्रबल दोषहरूका प्रबल विनाशकारी भवबन्धनबाट पनि तुरुन्त मोक्ष प्रदान गर्नुहुन्छ, उनै गुरुवर श्री निखिलेश्वरका निर्मल चिरशान्तिदायी चरणारविन्दको म वन्दना गर्दछु।

॥९४॥

**यत्पापविद्धचरितान् सुपुनाति हृष्टः**
**सर्वापराधमविचिन्त्य सुरापगेव ।**
**कालुष्यनाशनिपुणं तमुदारकीर्तिं;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

पतीतपावनी सुरसरिता गंगासमान गुरुले आफ्ना शिष्यहरूलाई पवित्र बनाउनुहुन्छ। श्रुति, स्मृति, शास्त्रहरूको यस उद्घोषणले मेरो दोषयुक्त जीवनलाई बडो आश्वासन प्रदान गरेको छ। जस्तै पापी भए पनि गंगाले आफ्ना स्नानार्थीलाई कहिल्यै तिरस्कार गर्नुहुन्न र गंगामा डुबुल्की मार्नेहरूका पाप त पखालिएर नै जान्छन्। यही विचारले म आफ्ना भूतिभावन, पतीतपावन गुरुलाई बडो यत्नपूर्वक खोजर उहाँको चरण समात्न आएकी छु जो आफ्ना शरणागतहरूका सम्पूर्ण अपराधहरूको चिन्ता नगरी पापनाशिनी भागीरथीसमान निमग्न चरित्र भएकाहरूलाई निर्मलता, पवित्रता प्रदान गर्नुहुन्छ; चिरसंचित पापलाई विनाश गर्न प्रवीण, लोकोत्तर उदारकीर्ति सम्पन्न, उनै गुरुवर श्री निखिलेश्वरका पावन चरणारविन्दमा भावपूर्ण हृदयले वन्दना गर्दछु।

## सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना-ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

### कुलदेवता

सृष्टिसँगसँगै, मनुष्यहरूको विकास र विस्तारसँगसँगै आफ्नो आफ्नो परिवारले अर्थात् आ-आफ्नै वंशका पुर्खाहरूले आफ्नो कल्याणको लागि, आफ्नो घर-परिवारको कल्याणको लागि कुनै देवीदेवतालाई विशेषरूपमा मान्दै आएको पाउँछौं । विभिन्न थरका व्यक्तिहरू अथवा विभिन्न गोत्रअनुसार विभिन्न देवीदेवताहरू कुलको रक्षार्थ संरक्षकको रूपमा रहेको पाउँछौं। पूर्वज ऋषिमुनिहरूले गोत्र परम्परालाई निरन्तरता दिँदै गोत्रलाई रक्षा गर्न, विकास, विस्तार गर्न, परिआएका घटना, परिघटनालाई समाधान गर्न र आफ्ना वंशजहरूको उद्धारका लागि स्थापित भएका देवीदेवता अथवा विभिन्न शक्तिहरू नै कुलदेवताको रूपमा पूजिदै आएको पाउँछौं । मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक साधक-साधिकाले मात्र होइन, सम्पूर्ण व्यक्तिहरूले नै आफ्नो कुलको बारेमा जानकारी

राख्नुपर्दछ । आफ्नो रक्षाको लागि, आफ्नै परिवारको रक्षाको लागि कार्य गरिरहनु हुने कुलदेवताका बारेमा धेरैलाई थाहा नहुन सक्छ। कतिलाई त लाग्न सक्छ, कुलदेवता भनेका कहाँका देवता हुन्, हामीले किन मान्नुपर्छ, नमाने के हुन्छ आदि इत्यादि प्रश्नहरू पनि उब्जिन सक्छन् । तपाईं, हामी कुनै न कुनै परिवारमा जन्मेकै हुन्छौं । त्यही जन्मअनुसार हाम्रो घरको निर्माण हुन्छ, त्यही मुताबिक गोत्र हुन्छ, जुन थरमा जन्मियौं, स्वाभाविकरूपमा नै त्यस घरमा कुलको सदस्य हुन्छ र आफ्नो कुलले मानेका देवीदेवतालाई मान्नुपर्ने कर्तव्य हुन आउँछ । उहाँहरूले सूक्ष्मरूपमा तपाईं, हाम्रो कल्याणको लागि, उन्नति-प्रगतिको लागि हुन र मिल्नेसम्मको सहयोग गरिरहनु भएको हुन्छ, आवश्यक वातावरणको निर्माण गरिदिनुभएको हुन्छ । तर हामीमा यी कुराहरू बुझ्ने क्षमता हुँदैन, ज्ञान हुँदैन । अज्ञानताको भुमरीमा रुमल्लिएको मनुष्यले यस्ता गूढ कुरा न बुझ्न सक्छ, न त बुझ्ने चेष्टा नै गर्दछ । हुन त कुलदेवताहरूले आफ्नो कुलको लागि गर्नुभएका अतुलनीय योगदानलाई पूर्वजहरूले पनि कदर गर्न खोजेको, आदर सम्मान गर्न खोजको पाउँछौं । यसैअनुरूप सधैं नसके पनि वर्ष, दुई वर्ष, तीन वर्ष आदिमा आफ्नो कुलका सम्पूर्ण सदस्यहरू भेला भई आ-आफ्नै विधि-विधानअनुसार पूजा-आराधना गरेको पाउँछौं । सम्पूर्ण कुलका सदस्यहरू जहाँ जहाँ छरिएर बसेका भए पनि कुलायनको दिनमा चाहिँ भेला भई एक आपसमा आत्मीयता गाँस्दै पूजा, आराधनामा लाग्ने, सँगै बसेर खाने गरेको पाउँछौं । यसरी आफ्ना कुलका सम्पूर्ण व्यक्तिहरू जम्मा भएर गरेको आराधनाबाट कुलदेवता खुशी हुन्छन् भन्ने मान्यता रहँदै आएको छ ।

कुलदेवता भन्ने बित्तिकै स्वभावैले कुलका सम्पूर्ण व्यक्तिहरू जम्मा भएर पूजा, आराधना गर्दा खुशी हुने देवतामा पर्नुहुन्छ । आफ्ना कुलका सबै मिलेर यस्ता दिव्य कर्म गर्दा, सबै मिलेर प्रसाद ग्रहण गर्दाको क्षण कुलदेवताका लागि पनि खुशी र आनन्दको क्षण हुन सक्दछ । यसैले होला, समाजमा हामीले देखिरहेका हुन्छौं कि कुलपूजा भन्ने बित्तिकै कुलको प्रतिनिधिको रूपमा लाग्ने मानिसहरू, त्यसमा पनि सकेसम्म र भएसम्म जेठा सदस्यहरूले प्रतिनिधित्व गरिरहेका हुन्छन् । उनीहरूकै रोहवरमा कुलपूजा सञ्चालन हुने गर्दछ, विभिन्न नियमहरू बनाइएका हुन्छन् । यस्ता आफ्नो सम्पूर्ण कुललाई रक्षा गर्ने, भलो गर्ने देवतालाई हामीले उचित आदर, सम्मान दिन सकेनौं, उल्टै अनादर, अपमान, तिरस्कार गर्नेतर्फ लाग्यौं, आफ्नो कुलको नीति, नियमलाई तोडमरोड गरी कुलको अस्तित्वलाई नै नकार्न थाल्यौं भने कुलदेवता रुष्ट हुन्छन् । रीति-रिवाजलाई मिचेर कुलको मर्यादालाई तोडेर कसैले पनि पुरुषार्थ गर्न सक्दैन । यसैले यसो भएमा कुलदेवता रिसाउने कुरामा दुईमत हुँदैन । हाम्रै रक्षा गर्ने, भलो गर्ने, उन्नति प्रगतिको मार्ग प्रशस्त गरिदिने देवतालाई नै रुष्ट बनाएपछि हाम्रो कल्याण हुने प्रश्नै उठ्दैन । अनि घर-परिवारमा अशान्ति, सम्पूर्ण कार्यमा असफलता, मानसिक यातनालगायतका सजायँको भागीदार हामी भइरहेका हुन्छौं । यी सम्पूर्णको निकास केवल कुलदेवता खुशी हुँदामा मात्रै सम्भव हुन्छ ।

**कुलदेवता भन्ने बित्तिकै स्वभावैले कुलका सम्पूर्ण व्यक्तिहरू जम्मा भएर पूजा, आराधना गर्दा खुशी हुने देवतामा पर्नुहुन्छ । आफ्ना कुलका सबै मिलेर यस्ता दिव्य कर्म गर्दा, सबै मिलेर प्रसाद ग्रहण गर्दाको क्षण कुलदेवताका लागि पनि खुशी र आनन्दको क्षण हुन सक्दछ । यसैले होला, समाजमा हामीले देखिरहेका हुन्छौं कि कुलपूजा भन्ने बित्तिकै कुलको प्रतिनिधिको रूपमा लाग्ने मानिसहरू, त्यसमा पनि सकेसम्म र भएसम्म जेठा सदस्यहरूले प्रतिनिधित्व गरिरहेका हुन्छन् । उनीहरूकै रोहवरमा कुलपूजा सञ्चालन हुने गर्दछ, विभिन्न नियमहरू बनाइएका हुन्छन्**

कुलदेवता खुशी हुँदा तपाईं, हाम्रो कल्याणको लागि जे गर्न पनि पछि नपरेको पाइन्छ । आफ्नो कुलका व्यक्तिहरूको कल्याण, उन्नति-प्रगति के गर्दा कसरी हुन्छ भन्नेमा उहाँहरूले सूक्ष्म तालमेल मिलाइरहनु भएको हुन्छ । सद्‌गुरुहरूसँग जोड्ने, दिव्य-दिव्य साधनाहरूमा भाग लिन, दिव्य-दिव्य कार्यक्रमहरूमा उपस्थित हुन एवं अन्य दिव्य अवसरहरू सूक्ष्मरूपमा कुलदेवताले नै व्यवस्था गरी मिलाइदिनु भएको हुन्छ । यस्ता गूढ-गूढ कुरा हामीले बुझ्दैनौं । हामीले नबुझे पनि उहाँहरूले अटुट कृपा वर्षाइरहनु भएको हुन्छ । मन्त्र साधनामा अगाडि बढ्ने साधक-साधिकाहरूसँग कुलदेवता सदैव खुशी हुने गर्नुहुन्छ । तर तपाईं, हामीले पनि उचित श्रद्धा, भक्ति अर्पण गर्नुपर्ने हुन्छ, आदर, सम्मान गर्नुपर्ने हुन्छ । साधना गर्दा, पूजन गर्दा उहाँहरूलाई सम्झने, आदि गरी प्रार्थना मात्र गर्दा पनि उहाँहरू खुशी हुने गर्नुहुन्छ । आफ्नो मान-मर्यादालाई, चलन चल्तीलाई मान्दा पनि उहाँहरू खुशी हुनुहुन्छ । यसैले आफ्ना कुलदेवतालाई खुशी बनाऔं, मन्त्र साधनामा सफलता हासिल गरौं ।

जय गुरुदेव !

# सांस्कृतिक रुपान्तरणको आवश्यकता

नेपालको इतिहासमा गत महिना एउटा महत्त्वपूर्ण महिनाको रुपमा स्थापित हुन पुग्यो । नेपाल र नेपालीले राजनैतिक रुपान्तरणको महसुस गर्ने अवसर प्राप्त गरे । यद्यपि यसको स्थायित्व र यसका अन्य पक्षहरुको बारेमा भने आउँदा दिन र आउँदा समयले नै बताउनेछ तैपनि लामो समयको अन्तरालपछि एउटा आमूल परिवर्तनको आभाससँगै देशमा शान्तिको सास फेर्न पाइन्छ कि भन्ने आशा आम नेपाली जनताले गरिरहेका छन् । राजनैतिक रुपान्तरणसँगसँगै अबको समाजले पनि रुपान्तरण खोजेको स्पष्ट महसुस भएको छ । केवल राजनैतिक रुपान्तरण मात्र समस्याको समाधान भने अवश्य होइन । यो सँगसँगै आर्थिक रुपान्तरण हुनु पनि जरुरी देखिन्छ । त्यसो त वर्तमान समयमा सबैले महसुस गरेको कुरा नै आर्थिक रुपान्तरण हो र आर्थिक क्रान्तिका कुराहरु पनि अहिले उठ्न थालेका छन् । पहिले देशमा शान्ति सुव्यवस्था, सुशासन र अमनचयन कायम भएपछि मात्र आर्थिक रुपान्तरण सम्भव हुन्छ भन्ने कुरालाई नकार्न सकिँदैन । आर्थिक रुपान्तरण सँगसँगै साँस्कृतिक रुपान्तरणको पनि अब टड्कारो आवश्यकता भइसकेको छ किनकि समाज एउटा यस्तो दिशातर्फ अहिले उन्मुख भएको छ जुन दिशातर्फ नै यदि समाजलाई छोडिदिने हो भने हामीले ठूलो साँस्कृतिक क्षति व्यहोर्नुपर्ने हुन्छ । एउटा देशको लागि महत्त्वपूर्ण सम्पति भनेको नै त्यो देशको संस्कृति हो । कुनै पनि देशलाई समाप्त पार्नु पऱ्यो भने त्यो देशको संस्कृतिलाई नै पहिले सिध्याउनुपर्छ भनेर इतिहासमा पनि अंग्रेजहरुले भारतवर्षमाथि आक्रमण गर्दा यस्तै नीति अपनाएको हामी पाउँछौं । त्यसैले हाम्रो देशमा पनि सांस्कृतिक हस्तक्षेपहरु भइरहेका छन् । अन्य कुराको अस्त-व्यस्ततासँगै साँस्कृतिक रुपमा नै हामीलाई अस्तव्यस्त बनाइयो भने अरु व्यवस्था त फेरि मिलाउन सकिएला तर यो साँस्कृतिकरुपमा विकृत भएको व्यवस्थालाई मिलाउन धेरै लामो समय कुर्नुपर्ने हुन्छ । त्यसैले हामीले सचेत हुने बेला आएको छ । अब साँस्कृतिक रुपान्तरणको लागि तपाईं हामी तयार हुनुपर्ने अवस्था आएको छ । यसको लागि हाम्रो आफ्नो आफ्नो धर्म, आफ्नो आफ्नो संस्कृति, आफ्नो आफ्नो परम्परा, आफ्नो आफ्नो चाडपर्व, आफ्नो आफ्नो रीतिरिवाज यी सबैको संरक्षण गरेर हामी नेपाली र हाम्रो नेपाल भन्ने भावना प्रत्येक जनमानसमा अब फेरि एकपटक प्रबलरुपमा स्थापित गर्नुपरेको छ । राष्ट्र र राष्ट्रियता सबैभन्दा ठूलो कुरा हो । राष्ट्र रहे नै हामी रहन्छौं भन्ने मूल मर्मलाई अब सारा नेपालीले आत्मसात् गर्नुपर्ने बेला आएको छ । सबैमा आध्यात्मिक भावनाको जागृत गराएर समाजलाई अध्यात्ममय बनाउने बेला अब अगाडि आएको छ । राजनैतिक, साँस्कृतिक, आर्थिक रुपान्तरणसँगसँगै अध्यात्ममय विश्वको परिकल्पनालाई साकार रुप दिनको लागि नेपालले उदाहरण बन्नुपर्नेछ । परमपूज्य सद्गुरुदेवहरुको महान् योजना 'गोरक्ष निखिल युग' स्थापनाको योजनालाई साकार रुप दिनका लागि पूर्वाधार बनाउनका लागि तपाईं हामी सबै अब कम्मर कसेर लाग्नुपर्ने समय आएको छ । यसका लागि प्रत्येक जनमा र प्रत्येक मनमा आध्यात्मिक भावना फैलाउनका लागि हामी सबैले सक्दो प्रयास गर्नु जरुरी देखिन्छ । मान्छेको जीवन केवल खान, लाउन, सन्तान उत्पादन गर्न र २-४ वटा घर बनाएर गृहस्थी सञ्चालन गर्नको लागि मात्र हैन । मानिसको जीवन परमार्थ प्राप्तिका लागि हो, मोक्ष प्राप्तिका लागि हो, मुक्ति प्राप्तिका लागि हो । यो सबै तब मात्र सम्भव हुन्छ जब उसले आफ्नो जीवनलाई केवल भौतिकतामा मात्रै सीमित गर्दैन । भौतिकता र आध्यात्मिकता दुवैलाई साथ साथ लिएर जब ऊ अगाडि बढ्दछ तब उसका भौतिक आवश्यकता सँगसँगै आध्यात्मिक आवश्यकता पनि परिपूर्ति हुँदै जान्छन् तब मात्र उसले परमार्थको कुरा सोच्न सक्छ । भोको पेटमा कसैले ध्यान गर्न सक्दैन, भोको पेटमा कसैले मन्त्रजप गर्न सक्तैन । शरीर लिएर जन्मेपछि पहिलो आवश्यकता गाँस, बास र कपास हो । यो तीन चीजबाट जब मान्छेले मुक्ति पाउँछ तब मात्र उसले परमार्थको कुरा सोच्दछ । त्यसैले पनि हामी आध्यात्मिक समाजको निर्माण गर्नुभन्दा पहिले प्रत्येक नेपालीलाई गाँस, बास र कपासको आधारभूत आवश्यकता पूरा गर्नका लागि आ-आफ्नो क्षेत्रबाट लागिपर्नु पहिलो आवश्यकता हुन आउँछ । त्यसका लागि राजनैतिक स्थिरता पनि चाहिन्छ, आर्थिक समृद्धि पनि चाहिन्छ र साँस्कृतिक रुपान्तरण पनि चाहिन्छ । अबको समाज अध्यात्ममय समाज हुनेछ । यो अध्यात्ममय समाज बनाउने जिम्मा तपाईं हाम्रो काँधमा छ । आउनुहोस् हामी सबै मिलेर समाजलाई अध्यात्ममय बनाऔं, आध्यात्मिक शान्ति ल्याऔं र आध्यात्मिक समाजको निर्माण गरौं । अस्तु ।